● वर्ष १० ● अङ्क ८ ● चैत्र २०६५ ● पूर्णाङ्क ११६

शाखा कार्यालयहरु

- **चितवन**, भ.न.पा- २, क्षेत्रपुर
  फोन: ०५६-५२१३८५
- **गोरखा**, सौरपानी–३ पोखरी,
  फोन: ९७४६०१८८७८, ९७४११२७७४५
- **कास्की**, पो.उ.म.न.पा.-१०, रामघाट,
  फोन: ०६१-५३०७८६
- **सर्लाही**, बरहथवा-७, एस्माली टोल,
  फोन: ०४६-५४०३३१
- **पाल्पा**, तानसेन,
  फोन: ९८४७०-२८१८८
- **ललितपुर**, लगनखेल,
  फोन:२२२००२१
- **गोरखा**, बसपार्क,
  फोन: ०६४-४२०३४८
- **तनहुँ**, दमौली, व्यास गुफा,
  फोन: ०६५-५६१६६२
- **लमजुङ**, बेँसीशहर, भीमसेनटोल
- **भक्तपुर**, कटुन्जे-१,
  फोन: ०१-६२१३४५५
- **काभ्रे**, बनेपा, न.पा. कार्यालय पछाडि
  फोन: ०१-६२२५१७२
- **कास्की**, लेखनाथ चोक,
  फोन: ०६१-२२९१९०
- **सिन्धुली**, रातमाटा
- **स्याङ्जा**, स्याङ्जाबजार
  फोन: ९८४६०-४४३५४
- **चितवन**, गौरीगञ्ज
- **सिन्धुपाल्चोक**, बाह्रबिसे
  फोन: ०१-६९१६५९३
- **कास्की**, अर्चलबोट, विन्ध्यवासिनी

पत्रिका व्यवस्थापन समितिद्वारा सम्पादित एवं
***सिद्धाश्रम शक्ति केन्द्रद्वारा* प्रकाशित**

## यक्षिणी विशेष

मूल्य रु. ३०/-, वार्षिक रु. ३५०/-

# जानकारी

सिद्धाश्रम शक्ति केन्द्र प्रचलित नेपाल कानूनअनुसार विधिवत् रूपमा दर्ता भएको एक अनुसन्धानमूलक आध्यात्मिक संस्था हो र यसको केन्द्रीय कार्यालय हाल बसुन्धरा, कल्की मन्दिरसँगै काठमाडौँमा रहेको छ । परमपूज्य सद्गुरुदेवद्वय परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज एवं नेपालीहरूका गर्वका प्रतिमूर्ति महायोगी श्री शिव गोरक्षको अनुकम्पा, कृपा एवं आशीर्वादको फलस्वरूप यस केन्द्रको जन्म भएको हो । आफ्नो छुट्टै पहिचान, स्वतन्त्र अस्तित्व एवं आफ्नै किसिमको स्वाभिमान बोकेको यो संस्था देश विदेशमा रहेका अन्य कुनै संघ, संस्था वा आश्रमको शाखा, उपशाखा वा सम्पर्क कार्यालय नभएको व्यहोरा सम्बन्धित सबैका लागि जानकारी गराइएको छ । यो केन्द्र महान् गुरुहरूको स्पष्ट सूक्ष्म मार्गनिर्देशनमा आध्यात्मिक युग पुनर्निर्माणको लक्ष्यमा गतिशील छ । यहाँ संचालन भइरहेका सम्पूर्ण कार्यक्रम तथा गतिविधिहरू यसै केन्द्रमार्फत सोझै निर्देशित छन् । यहाँबाट उपलब्ध हुने सम्पूर्ण सामग्रीहरूको प्राण-प्रतिष्ठा विशेषरूपमा यही आश्रमबाट गरिएको हुन्छ । त्यसैले एक स्वतन्त्र र आफैमा सक्षम यस संस्थालाई अन्य कुनै संघ, संस्था वा आश्रमसँग तुलना गर्न खोज्नु, त्यस्तै प्रकारका कुराहरू यहाँबाट लागू गराउन, प्राप्त गर्न खोज्नु यस संस्थाको अवहेलना गरे सरह हुनेछ जे जति कार्यक्रमहरू यहाँ संचालन भइरहेका छन् र आगामी दिनहरूमा पनि संचालन हुँदै जानेछन्, ती सबै परमपूज्य सद्गुरुदेवहरूकै इच्छा एवं निर्देशनअनुसार सम्पन्न हुनेछन् । त्यसैले अनावश्यक तर्क-वितर्क, शङ्का-उपशङ्का गरी, भ्रम फैलाउँदै यस संस्थाको छविमाथि अनावश्यक टीका-टिप्पणी गर्नु सत्यता र वास्तविकतामाथि नै प्रश्नचिह्न लगाउनु हो । प्रत्येक व्यक्तिका लागि आवश्यक पर्ने सम्पूर्ण प्रकारका मार्गनिर्देशन प्रदान गरी भौतिक समस्याहरूको समाधान गर्दै आध्यात्मिक उच्चता प्रदान गर्न, पूर्णतामा लैजान यो केन्द्र सक्षम छ । विश्वास अविश्वासभन्दा माथि, साधारण व्यक्तिको सीमित सोचाइ, विचार र कल्पनाभन्दा परको यस अद्वितीय आश्रममा आबद्ध भई आफ्नो जीवनलाई उत्कर्षमा पुऱ्याउन सक्नु नै हाम्रो अहोभाग्य हुनेछ । यस्ता प्रकारका अनावश्यक भ्रमबाट सतर्क हुँदै पूर्णरूपमा स्पष्ट भएर मात्र अघि बढ्न हुन सम्पूर्ण महानुभावहरूमा सिद्धाश्रम शक्ति केन्द्र हार्दिक अनुरोध गर्दछ । साथै केन्द्रको आफ्नै प्रकारको नीति, नियम र अनुशासन भएकोले यसलाई पालना गर्न नसक्ने व्यक्तिहरूका लागि यस केन्द्रमा कुनै स्थान रहने छैन र यससम्बन्धी कुनै किसिमको सुनुवाइ पनि नहुने व्यहोरा अवगत गराइएको छ । साथै, आध्यात्मिक शक्ति अनुसन्धानमूलक यस मासिक पत्रिकामा प्रकाशित लेख, रचना, चित्रादिमा संस्थाको सहमति हुन आवश्यक नरहेको व्यहोरा अवगत गराइन्छ ।

## परामर्श सेवासम्बन्धी सूचना

सिद्धाश्रम शक्ति केन्द्रमा परामर्श सेवासम्बन्धी प्राप्त सुविधा निम्नानुसार रहेको जानकारी गराइन्छ ।

| स्थान | समय | बार |
|---|---|---|
| केन्द्रीय कार्यालय | साँझ ४:३० बजेपछि | सोमबार र मङ्गलबार |
| ललितपुर सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | मंगलबार र बिहीबार |
| भक्तपुर सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | शनिबार र बुधवार |
| बनेपा सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | प्रत्येक आइतबार |

## आश्रमका नियमित कार्यक्रमहरू

- आश्रम खुल्ने समय : प्रत्येक दिन बिहान १०:०० बजेदेखि साँझ ६:०० बजेसम्म ।
- गोरक्ष निखिल पुस्तकालय खुल्ने समय : प्रत्येक दिन १०:०० बजेदेखि साँझ ५:०० बजेसम्म ।
- परामर्श सेवासम्बन्धी भेटघाट : अपराह्न ३:०० बजेपछि ।
- आरती : प्रत्येक साँझ ५:०० बजे ।
- गुरु पूजन : प्रत्येक बृहस्पतिबार बिहान १०:०० बजेदेखि ।
- विशेष गुरु पूजन : प्रत्येक अंग्रेजी महिनाको २१ तारीख, बिहान १०:०० बजेदेखि ।
- आध्यात्मिक शक्ति अनुसन्धानमूलक नेपालको एक मात्र मासिक पत्रिका 'गोरक्ष निखिल वाणी'को नियमित प्रकाशन ।
- विशेष साधना : विभिन्न जिल्लाहरूमा विशेष साधना कार्यक्रम ।
- विभिन्न चाड-पर्व एवं अवसरहरूमा विशेष कार्यक्रम ।
- विशेष हवन: प्रत्येक महिनाको पहिलो सोमवार श्री शिव गोरक्ष हवन, पहिलो मङ्गलवार तान्त्रोक्त वटुक भैरव हवन, पहिलो बुधवार तान्त्रोक्त महालक्ष्मी हवन र पहिलो बिहीवार तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम संचालन ।


**आवरण तथा भित्री कम्प्युटर सेटिङ्ग**

सिद्धाश्रम शक्ति केन्द्र, कम्प्युटर उपविभाग

**मुद्रण**

**भेराइटी प्रिन्टर्स प्रा.लि.**

कुलेश्वर, काठमाडौं ।

**पत्रिकाको कार्यालय**

**बसुन्धरा, कल्की मन्दिर, काठमाडौं, नेपाल**

**फोन नं: २०७१२००,२१००१५३, पत्रिका वितरण फोन नं: ०१-६२२५१७७** (CDMA Phone), URL: www.gnv.org.np, Email: info@gnv.org.np

# आफ्नै कुरा

*कुनै पनि चिजको प्राप्ति त्यति सहज र सरल हुँदैन। वर्षौंको मेहनत, परिश्रम, निरन्तरता, धैर्य आदि चिजको सहाराले नै व्यक्तिले जीवनमा केही उपलब्धि हासिल गर्दछ। यसरी वर्षौं लगाएर प्राप्त गरेको उसको कुनै पद, प्रतिष्ठा होस् वा व्यक्तित्व, धन सम्पति होस् वा साधनाको सफलता नै किन नहोस्, त्यसलाई जोगाइराख्नु पनि आफैमा कठीन साधना हो भन्दा फरक नपर्ला। व्यक्तिले हासिल गरेका उपलब्धि, इज्जत, मान, पद, प्रतिष्ठा आदिलाई जोगाइराख्नु आफैमा चुनौतीपूर्ण कार्य हो। कुनै चिजको प्राप्ति मात्रै ठूलो कुरा होइन, त्यो प्राप्तिलाई विशुद्धरुपमा सम्मानित बनाइराख्नु, यसको गरिमामय स्वरुपमा नै स्थित रहनु कठीन कार्य हो। इज्जत कमाउनु ठूलो कुरा हो भने कमाएको इज्जत जोगाउनु झनै ठूलो कुरा हो। समाजको प्रत्येक क्षेत्रमा कमाएको प्रतिष्ठा, मान, सम्मान आदिलाई सुरक्षित राख्नु धेरै व्यक्तिको लागि चुनौती बनेको पाइन्छ। वर्षौं राजनीति गरेका नेताहरु हुन् वा कर्मचारी; कलाकार, व्यापारी, समाजसेवी हुन् वा अध्यात्मवादी; धार्मिक हुन् वा भौतिकवादी, सबैलाई नै आफूले प्राप्त गरेको मान, सम्मान, पद, प्रतिष्ठा जोगाउन कठीन रहेको देखिन्छ। धेरैजसो व्यक्तिहरु प्राप्त सफलताका श्रेयहरुलाई जोगाउन नसक्दा पतन पनि भएको पाइन्छ। यसैले कुनै चीजको प्राप्तिलाई मात्रै सम्पूर्णता ठानेर मात्तिनु, बिग्रनुभन्दा पहिल्यै त्यसलाई जोगाउनतर्फ पनि मेहनत गर्नु श्रेयस्कर मानिन्छ।*

*यसपालि हामीले यस अंकलाई 'यक्षिणी' विशेषको रुपमा निकालेका छौं। 'यक्षिणी' शब्द बूढापाकाहरुका लागि, अध्यात्म चिन्तनमा अगाडि बढ्नेहरुका लागि नौलो शब्द नभए पनि आम व्यक्तिहरुका लागि नयाँ हुन सक्दछ। मानव, देव भनेजस्तै यक्षिणीहरुको पनि स्वतन्त्र अस्तित्व एवं आफ्नै पहिचान रहेको पाइन्छ। यक्षिणीहरुलाई एउटा विशेष जातिको रुपमा, योनिको रुपमा मानिएको छ। यक्षिणीहरुलाई सुख, समृद्धि, वैभव, ऐश्वर्य, भोग, सौन्दर्य, आनन्दको प्रतीक मानिन्छ। यक्षिणीहरुको सहयोगले मानव जीवनमा सुख, समृद्धि, ऐश्वर्य, आनन्दका साथमा भोगपूर्ण जीवन बिताउनलाई पूर्ण सहयोग प्राप्त हुनुका साथै आध्यात्मिक चिन्तनमा पनि अगाडि बढ्न प्रेरणा प्राप्त हुन्छ। यक्षिणीहरुलाई साधनाको माध्यमबाट सिद्ध गर्न सकिन्छ, उनीहरुको सहयोग प्राप्त गरी जीवनका अभाव, संकट, दरिद्रताबाट माथि उठी सम्पन्नता, ऐश, वैभवका साथ आनन्दमय जीवन बिताउन सकिन्छ। परमपूज्य सद्‌गुरुदेवले आफ्नो जीवनकालमा यक्षिणी साधनाका गूढ रहस्यहरु उजागर गरी सहज र सरलरुपमा जो कोहीले पनि यस साधनाबाट फाइदा लिन सक्ने गराइदिनुभई यक्षिणीको वास्तविकतालाई समाजसमक्ष उजागर गरिदिनुभएको छ। यसरी आज पनि यक्षिणीहरुको सत्यतालाई अनुभव गर्न सकिने, फाइदा लिन सकिने, साक्षात्कार गर्न सकिने यथार्थलाई प्रमाणित गरिदिनुभएको छ।*

*यस अंकमा हामीले यक्षिणीसम्बन्धी केही जानकारी दिने कोशिश गर्‍यौं। यक्षिणीका बारेमा अझै धेरै खोज अनुसन्धानको खाँचो छ। जे जति जानकारी दिने कोशिश गरियो यसैलाई नै पूर्णता नठान्नु होला।*

*अन्तमा यस अंकमा भए गरेका कमी कमजोरी न्यूनताहरुको लागि परमपूज्य सद्‌गुरुदेवहरुसँग र यहाँहरुसँग पनि क्षमा माग्दै आवश्यक सल्लाह र सुझावको अपेक्षा गर्दछौं।*

*अस्तु!*

उनीहरुको अत्यधिक कामशक्ति नै उनीहरुको न्यूनता हो । त्यसैले उनीहरु ऊर्ध्वमुखी हुन सकेनन् । त्यसो हुनाले उनीहरु भोगको दुनियाँमा बस्नुपर्ने हुन्छ । यक्षिणीलोक भोगको दुनियाँ हो । त्यहाँको सुख, शान्ति, सम्पन्नता, वैभवको त लेखाजोखा नै हुन सक्दैन ।

जे पनि गराउन सक्ने, कसैलाई पनि धनधान्य प्रदान गरेर सम्पन्न बनाउन सक्ने, सम्पन्नता दिन सक्ने, सुख-सयल सबै दिन सक्ने, जीवनमा छुट्टै प्रकारको आनन्द प्रदान गर्न सक्ने क्षमता अप्सराहरुमा भएजस्तै यक्षिणीहरुमा पनि हुन्छ ।

# यक्षिणी

यस विराट् ब्रह्माण्डभित्र रहेका विभिन्न लोकहरूमध्ये यक्षिणी लोक पनि एउटा हो । जति पनि दैवी लोक छन्, तिनीहरू सरह नै यक्ष-यक्षिणी लोकको मान्यता नभए पनि देवीदेवताहरूले गर्न सक्ने काम, उनीहरूका कर्तव्य र क्षेत्रहरू जति पनि छन्, ती सबै यक्ष-यक्षिणी लोकमा पनि पर्दछन् । यक्ष-यक्षिणीबाट विकसित भएर देवत्व जत्तिकै मान, सम्मान पनि उनीहरूले पाउँछन् । यस विषयमा कुबेरको उदाहरण लिन सकिन्छ । उनी यक्षकुमार हुन् । उनले देवीदेवताले जस्तै मान प्राप्त गरे, उच्चता प्राप्त गरे यद्यपि उनको वास्तविक संस्कार यक्षको हो । शास्त्रले पनि उनलाई यक्षकुमारको संज्ञा दिएको छ ।

ब्रह्माण्डमा जे जति प्रकारका विषयवस्तु छन्, तिनलाई सुव्यवस्थित एवं सुन्दर रूप प्रदान गर्ने काम यक्षिणीको हुन्छ । भौतिक भाषामा भन्नुपर्दा कुन चिजलाई कहाँ कसरी राख्दा राम्रो हुन्छ, ती सबै प्रकारका सजावटसम्बन्धी, शृङ्गारसम्बन्धी, सौन्दर्यसम्बन्धी विषयवस्तुहरूलाई नियमानुसार सञ्चालित गर्ने स्वरूपको नाम नै यक्षिणी हो । यक्ष-यक्षिणी लोक यसै विषयमा आधारित छ । यक्षिणीले विशेष गरेर शृङ्गार एवं सौन्दर्य प्रदान गर्दछन् । अप्सराहरू अत्यन्तै सुन्दर देखिन्छन्, आकर्षक देखिन्छन् भनेर शास्त्रमा बताइएको छ । ती अप्सराहरूमा आकर्षण भर्ने काम, उनीहरूमा सौन्दर्य भरिदिने काम यक्षिणीहरूले गर्छन् । त्यसैले प्रत्येक अप्सराको नाममा जोडिएका यक्षिणीहरू पनि हुन्छन्, यक्षिणीको नाम पनि त्यही सम्बन्धित अप्सराको जस्तै हुन्छ । जस्तै, कामदेहा अप्सरा छिन् भने कामदेहा यक्षिणी उनको सहायक हुन्छिन्, मृगनयना अप्सरा भएजस्तै मृगनयना यक्षिणी पनि हुन सक्दछिन् । यसप्रकार प्रत्येक अप्सरासँग सम्बन्धित यक्षिणी हुन सक्दछन् । अप्सरालाई अप्सरा बनाइदिने काम यक्षिणीले गर्दछन् । कस्तो शृङ्गारस्वरूपमा अप्सरा आकर्षक देखिन्छिन्, मनमोहक देखिन्छिन्, त्यही स्वरूपको बनाउने काम यक्षिणीले गर्दछन् । यथार्थमा आफ्नो स्वरूप कस्तो छ, आफू कस्तो बन्न सकिन्छ भनेर अप्सराहरूलाई नै थाहा हुँदैन । ती सबै काम यक्षिणीहरूले गर्दछन् ।

भौतिकरूपमा मनुष्य सत्तामा कति व्यक्तिहरूलाई शृङ्गारसम्बन्धी जुक्ति फुर्ने जस्तै सामानहरू कसरी मिलाएर

राख्दा राम्रो देखिन्छ, फूलबारीमा कुन फूल कतातिर हुँदा राम्रो देखिन्छ भन्ने जुन प्रकारका योजनाहरू आउँछन्, ती सबै यक्षिणीहरूकै प्रभावबाट आउने गर्दछन् । विशेष गरेर यो बाहिरी भौतिक दुनियाँमा आकर्षण दिने, सौन्दर्य दिने, एक प्रकारको आनन्द दिने स्वरूप नै यक्षिणीहरू हुन् । यिनीहरू स्थूलरूपमा पनि हुन्छन् र सूक्ष्मरूपमा पनि हुन्छन् । यिनीहरूको लोक यक्षिणीलोक भए पनि कार्यथलो पृथ्वीलोक अर्थात् मनुष्य लोक पनि हुन सक्दछ । आवश्यक पर्दा उनीहरू भौतिकरूपमै प्रकट भएर पृथ्वीमा आएर काम गर्न पनि सक्छन् । जे पनि गराउन सक्ने, कसैलाई पनि धनधान्य प्रदान गरेर सम्पन्न बनाउन सक्ने, सम्पन्नता दिन सक्ने, सुख-सयल सबै दिन सक्ने, जीवनमा छुट्टै प्रकारको आनन्द प्रदान गर्न सक्ने क्षमता अप्सराहरूमा भएजस्तै यक्षिणीहरूमा पनि हुन्छ । त्यसैले मनुष्यले यक्षिणी साधना गरेर यक्षिणी सिद्ध पनि गर्ने गर्दछन् । यदि त्यसो भयो र कुनै यक्षिणी मनुष्य लोकमा आएर श्रीमतीकै रूपमा रहन लागिन् भने तिनले घर परिवारलाई आनन्दमय, सुख-शान्तिमय एवं सम्पन्न बनाउँदछिन्, त्यस घरलाई सुव्यस्थित स्वरूप प्रदान गर्दछिन् । सबै क्षमताहरू भएर पनि यिनीहरू माथिल्लो सत्तामा प्रवेश गर्न नसक्नुको कारण यिनीहरूमा हुने अत्यधिक काम वासनारूपी राग हो । उनीहरूले चाहे भने जो कोहीलाई पनि आफ्नो अधीन गर्न सक्छन् । उनीहरूको अत्यधिक कामशक्ति नै उनीहरूको न्यूनता हो । त्यसैले उनीहरू ऊर्ध्वमुखी हुन सकेनन् । त्यसो हुनाले उनीहरू भोगको दुनियाँमा बस्नुपर्ने हुन्छ । यक्षिणीलोक भोगको दुनियाँ हो । त्यहाँको सुख, शान्ति, सम्पन्नता, वैभवको त लेखाजोखा नै हुन सक्दैन । उनीहरू त्यो भोगमा अत्यन्तै रमाएका हुन्छन् । त्यस्तो स्वरूपमा रहेर उनीहरूले कामवासनालाई त्याग्न सकिरहेका हुँदैनन्, त्यही कारणले उनीहरू मनुष्यप्रति आकर्षित भएका हुन् ।

यक्षिणी साधनाबाट मनुष्य जीवनमा सुख, शान्ति, वैभव, सम्पन्नता प्राप्त हुन्छ । व्यक्ति जब दरिद्र हुन्छ, अभावै अभावको दुनियाँमा हुन्छ, जीवनमा फितलोपना हुन्छ, त्यसबेला यक्षिणी साधना गरेर सफलता मिल्यो भने यक्षिणीको प्रभावबाट उसको जीवनमा सुख, शान्ति, वैभव, सम्पन्नता, उत्साहजस्ता सबै प्रकारका गुणहरू विकास हुन्छन् । कतिपय यक्षिणीहरू सिद्ध हुँदा स्थूल देह

नै लिएर आउँदछन् । यसरी कतिपय सिद्ध साधकहरूको श्रीमतीको रूपमा पनि उनीहरू रहन्छन्, असल मित्रको रूपमा पनि उनीहरू स्थापित हुन्छन् । कतिपय यक्षिणीहरू त्यसरी स्थूलरूपमा नआईकन कसैको सूक्ष्म देहमार्फत पनि आउन सक्छन् । यसरी सूक्ष्म देहमा प्रवेश गर्ने अवस्थामा यदि कोही केटी मान्छे वा आइमाई इच्छुक छिन् भने सामान्य वातावरण मिलाइदिएको भरमा त्यस्तोको देहमा पनि यक्षिणीहरू आउँछन् । उनीहरू यसरी प्रवेश गर्दा मानिसको जीवनपद्धति एकाएक नै बदलिन्छ, मानिसको आकर्षण बढ्छ, राम्रा हुन थाल्छन्, जे कुरा पनि मिलाउन सक्ने क्षमता हासिल हुन थाल्छ, सबै प्रकारका सफलताहरू मिल्दै जान्छन् र अत्यधिक रूपमा सफलता मिल्छ । यक्षिणीहरूले यी सबै गराउनुको कारक तत्त्व उनीहरूको न्यूनताको रूपमा रहेको कामशक्ति हो । जुन देहमा प्रवेश हुन्छ, त्यस देहमा पनि यिनीहरूले कामशक्ति अत्यधिक बढाइदिने गर्दछन् । त्यसबेला अरूले उत्प्रेरित गरेर यो शक्ति बढिरहेको हो भन्ने कुरा बुझ्न सकियो भने त राम्रै भयो तर त्यस व्यक्तिले विचार गर्न सकेन भने, यो कामशक्ति

यदि ऊ सुरक्षित वातावरणमा छ, ऊ राम्रो छ, उसको घर-परिवार सबै ठीक छ, ऊ वैवाहिक जीवनमा प्रवेश गरिसकेको छ भने त ऊ आफ्नै ठाउँमा हुन्छ । तर अवस्था बेग्लै छ भने आफ्नो कामवासनालाई जसबाट पनि पूरा गर्ने वा जसलाई पनि उसले मन पराउने हुन सक्छ। आफूभित्र छिपेर रहेको सूक्ष्म यक्षिणी स्वरूपको शक्तिले जस-मेरो आफ्नै हो भन्ने ठान्यो भने उसको सुख, सम्पत्ति, वैभव, सम्पन्नतासँगसँगै कामशक्ति पनि त्यही मात्रामा बढ्न जान्छ । कामशक्तिको वृद्धि भएपछि भोगको अपेक्षा हुन्छ। यस्तो अवस्थामा जसलाई मन पराउन थाल्छ, मानिसले त्यही-त्यही व्यक्तिलाई मन पराउँदै जान्छ । उनीलाई जो-जो सँग भोग गर्न मन लाग्छ, स्थूल मानिसलाई पनि त्यही-त्यहीसँग भोग गर्न मन लाग्ने हुन सक्छ । त्यस्तो हुनुलाई हाम्रो सामाजिक परिवेशमा राम्रो मानिन्न । त्यस्तो बेलामा विश्लेषण क्षमता भएन भने व्यक्ति दुर्घटनामा पर्न सक्छ, यसबाट बच्न आफू स्वयं नै चेतनाशील हुनुपर्दछ ।

अर्को कुरा, यदि आफूलाई के हुन लागिरहेको छ भनेर थाहा पाएर पनि आफ्नो सुरक्षा गर्न सकिएन भने त्यस्तो व्यक्तिले क्षमतावान् व्यक्तिको मद्दतबाट साधनाहरू गरेको छ अथवा ध्यान गरेको छ अथवा सूक्ष्म च्यानलमा बसेर अगाडि बढिरहेको छ भने उसले सोही क्षमतावान् व्यक्तिबाट मार्गनिर्देशन लिएर के ठीक, के बेठीक सोधी ढुक्क भएर अगाडि बढ्न सक्छ । यस्तो परिवेशमा उसलाई सुरक्षा दिने काम, मद्दत गरिदिने कामचाहिँ माथिल्लो सत्ताको हो । जो योग्य व्यक्तित्व छन्, उनीहरूले मद्दत गरिदिएर सुरक्षाको काम गर्छन् । त्यस्तो अवस्थामा नराम्रो हुनबाट जोगिन सक्छ ।

कतिपय इतर शक्तिहरूले मानिसको देहलाई प्रयोग गरेर विभिन्न नराम्रा घटना, परिघटनाहरू गराएका हुन्छन् । यक्षिणी प्रवेश गर्दा फाइदाका अतिरिक्त बेफाइदा पनि हुन सक्छ ।

## अष्ट-यक्षिणी

| **नाम** | **कार्य र गुण** |
|---|---|
| सुरसुन्दरी | परम सुन्दरी र धनसम्पत्ति, आर्थिक सम्पन्नता दिनमा सक्षम |
| मनोहारिणी | मन्त्रमुग्ध पार्ने व्यक्तित्व भएकी र धन-प्रदात्री |
| कनकावती | सुन्दरी किशोरी कनकावतीले सबै शत्रुलाई नाश गर्ने शक्ति दिन्छिन् |
| कामेश्वरी | खुशी र धन प्रदात्री |
| रतिप्रिया | सुनको गहना मन पराउने, यिनले शक्ति र प्रसन्नता प्रदान गर्छिन् |
| पद्मिनी | ठूलठूला र सुन्दर आँखाकी धनी यिनले आत्मविश्वास र मानसिक शक्ति प्रदान गर्छिन् |
| नती | हरेक परिस्थितिमा सुरक्षा प्रदान गर्छिन् |
| अनुरागिनी | धन, मान-सम्मान र प्रसिद्धि प्रदात्री । |

तर हामीमा न्यूनताहरू छन् भने मात्र यस प्रकारको बेफाइदा हुने हो । न्यूनताहरू छैनन् भने उनीहरूको त्यो शक्ति अत्यधिक मात्रामा वृद्धि भए पनि त्यही किसिमबाट अगाडि भने बढिन्न । यसरी अन्तमा हामीलाई सफलता नै हात लाग्छ ।

यसै सन्दर्भमा के भन्न सकिन्छ भने यक्षिणीहरू अरूभन्दा अलि सौम्य प्रकृतिका हुन्छन्, उनीहरूले माथिल्लो लोकको बारेमा केही बुझेको हुनाले साह्रै नै तल्लो स्तरको काम चाहिँ गर्दैनन् । उनीहरूसँग सबै कुरा भएर पनि आफ्नो कमजोरी अर्थात् कामशक्तिलाई जित्न नसकेको हुनाले यक्षिणी लोकमा रहनु परेको हो । यदि उनीहरूलाई कोही मन पऱ्यो र मन परेको यदि मनुष्य हो भने पनि जबर्जस्ती गरेर, आफूले कुनै भूमिका बाँधेर, आफ्नो शक्तिको प्रयोग गरेर उसलाई फँसाउने काम चाहिँ गर्दैनन् । यक्षिणीले के चाहिँ गर्न सक्छन् भने अध्यात्म पथमा लागेको छैन भने यसतिर लाग्ने बनाइदिन्छन्, लागेपछि केही कुराहरू बुझ्ने बनाइदिन्छन्, साधनाको महत्त्व बुझ्दै गएपछि उसलाई यक्षिणी साधना नै गर्न मन लाग्ने बनाइदिन्छन् । यक्षिणी साधना त स्वतः उनैको हो । त्यस व्यक्तिले साधनामा अलि-अलि दुःख गर्दा नै सिद्ध हुन्छ । त्यसपछि सम्बन्धित यक्षिणीले उसको जीवनमा आएर भोग गर्छिन् । आफूले चाहेको व्यक्तिलाई भोग गर्न यसप्रकारको प्रक्रिया हुन सक्छ । तर यक्षिणीलाई कोही मन पऱ्यो भनेर एकैचोटि गएर उसलाई जबर्जस्ती फँसाएर, देह क्याप्चर गरेर आफ्नो कामवासना पूरा गर्ने गर्दैनन् । यस्तो अप्रिय घटना घटाउने काम यक्ष यक्षिणीबाट हुँदैन । यस्तो काम त विशेष गरेर भूत, प्रेत, पिशाचहरूबाट हुन्छ । कतिपय अतृप्त आत्माहरू हुन्छन्, उनीहरूले भोग गर्न खोजिरहेका हुन्छन् । तल्लो योनिमा प्राप्त भएकाहरूले त्यस्तै वातावरण पाएको अवस्थामा भने समाजमा जबर्जस्ती घटना, परिघटना घटाउँछन् ।

कुनै साधकको जीवनमा यक्षिणी आइन् र उनले आफ्नो उद्देश्य, लक्ष्य पूरा गरिन् भने आफ्नो भोग सकिएपछि उनी त आफ्नो तहबाट माथिल्लो तहमा जानुपर्ने हुन्छ, अनि त्यो साधकलाई पनि स्वतः नै फाइदा पुग्न जान्छ । उसको जीवनमा भौतिक उन्नति, प्रगति, सफलता, सम्पन्नता प्राप्त हुन्छ । आध्यात्मिक दुनियाँमा पनि उसले निरन्तररूपमा आफ्नो साधना, तपस्या बढाइरहनु पर्दछ । यक्षिणी त आफ्नो उद्देश्य, लक्ष्यमा एउटा बाधा फुकाउन आइन् । हाम्रा पनि कमजोरी थिए, हामीमा धन-सम्पत्ति, सुख-शान्ति, सम्पन्नतामा कमी थियो, यी कुराहरूको हामीलाई चालच बढ्यो । यही कमजोरीको फाइदा उठाएर यक्षिणीले आफ्नो बाधा हटाउँछन् । जुन कुराहरू आफूसँग भएर पनि माथि जान सकिरहेकी छैन, मानिसलाई ती कुराहरूको चाहना छ भन्ने बुझेर उनले आफ्ना सुख, शान्ति, वैभव, सम्पन्नता मानिसलाई दिन्छिन् ।

यसको बदलामा उनले आफ्नो भोग पूरा गर्छिन् । यसपछि उनी जान्छिन् । यक्षिणीले सुख, सम्पत्ति, वैभव मानिसलाई दिएर त्यसको त्याग गरेर माथि गएजस्तै हामीले पनि तपस्या गर्दै उच्चता हासिल गर्न लाग्यौं भने त्यो सुख, शान्ति, वैभव, सम्पन्नता त्याग गर्न सक्नुपर्दछ । त्याग नगरी हामी माथि जान सक्दैनौं । जबसम्म हामीमा त्यागको भावना विकसित हुँदैन, हामी पनि तलै अड्केर बसिरहनुपर्दछ जसरी कामवासनालाई त्याग गर्न नसकेर यक्षिणीहरू त्यही स्वरूपमा रहिरहनुपर्दछ । त्यसैले अन्ततोगत्वा यदि हामीले उच्चता प्राप्त गर्ने नै हो भने यो तथ्यमाथि विचार गर्नु सान्दर्भिक हुन सक्दछ । जय गुरुदेव !

# यक्षिणी– एक विवेचना

**ॐ यक्षराज नमस्तुभ्यं शंकरप्रिय वान्धवः ।**
**एकां मे वशमां नित्यं यक्षिणीं कुरुते नमः ॥**

अर्थात् 'भगवान् शिवका प्रिय बन्धु यक्षराज कुबेरलाई प्रणाम ! उहाँको कृपाले एउटी यक्षिणी मेरो वशीभूत होऊन् ।'

परब्रह्म परमातमाको सृष्टिभित्र अनेक जीवन पाइन्छन् । बाहिरी आँखाले देख्न नसकिने अत्यन्तै सूक्ष्म जीवदेखि कीरा-फट्याङ्ग्राजस्ता कीरा वर्गमा पर्ने जीव मात्र नभई चराचुरुङ्गी, विभिन्न जनावरहरू र श्रेष्ठ चेतनास्तर भएको मानव भगवान्को सृष्टिभित्रका सुन्दर फूल हुन् । यी फूलहरूबाहेक परमात्माले चेतनाको धरातल अत्यन्तै उच्च र विभिन्न शक्ति, सिद्धि र सामर्थ्यले युक्त अन्य फूलहरूको पनि सृजना गर्नुभएको छ । विभिन्न लोक, लोकान्तर र दिव्य अलौकिक ठाउँमा निवास गर्ने परी, अप्सरा, देवगण, लोकपाल, दिक्पाल, गन्धर्व, यक्ष, किन्नरहरू भगवान्को बगैँचाका सुन्दर फूलहरू हुन् । यी फूलहरूका बीच विभिन्न सिद्धि र शक्तिले शोभायमान भई फुलेका छन्– यक्षिणीहरू ।

**परिचय–**

अनिन्द्य सुन्दरताको खानी बोकेर परमातमाको सृष्टि लीलामा आफ्नै पृथक् अस्तित्व र भूमिका निभाउने यक्षिणीलाई यक्षी पनि भनिन्छ । पाली भाषामा यक्षिणीलाई यखिनी भन्ने गरिएको पाइन्छ । यक्ष शब्द पुलिङ्गी हो भने यक्षिणीले स्त्रीलिङ्गको बोध गराउँछ । हिन्दुमा मात्र होइन, जैन र बौद्धमार्गीहरूले पनि यक्ष-यक्षिणीहरूको अस्तित्वलाई स्वीकारेको पाइन्छ । प्रायशः दयालु कोटिमा गनिने यक्ष-यक्षिणी अलकापुरीका धनाध्यक्ष कुबेरसमक्ष उपस्थित भएर धन-सम्पत्तिको रखवारी गर्छन् । यिनीहरू परी तथा अप्सराजस्तै मानिन्छन् । चौडा तिघ्रा, पातलो कम्मर, उन्नत वक्षस्थल यक्षिणीहरूको चिनारी हो ।

यक्षिणीहरू अभिशप्त देववर्गका स्त्री हुन् । देवयोनिमा भ्रमवश अथवा प्रमादवश कुनै अपराध हुन जानाले त्यस योनिबाट तल झरेर तर मानवभन्दा माथिको योनिमा आउनुपर्दछ र यही यक्ष योनि उत्पत्तिको कथा हो । यस योनिमा रहेर यक्ष एवं यक्षिणीहरूले विविध प्रकारले सबैलाई सन्तुष्ट गरेर आफूलाई श्रापबाट मुक्त गर्नुपर्ने हुन्छ । यसै कारणवश यक्षिणीहरुले आफ्ना साधकहरूलाई विविध

प्रकारका द्रव्य, आभूषण र चमत्कारी वस्त्रहरूका साथसाथै मनोवाञ्छित भोग र मनोरञ्जन पनि प्रदान गर्छन् । यसो गर्नाले यक्षिणीलाई मुक्ति सम्भव हुन्छ । श्रापबाट मुक्त हुने विवशताका अतिरिक्त यक्षिणीको स्वरूप एवं हाउभाउ अत्यन्तै विलासी हुन्छ र साधकलाई अनेक प्रकारले मनोरञ्जन पनि गर्छन् । विनोदप्रियता र उत्तेजक हाउभाउ यक्षिणीको अतिरिक्त विशेषता हो । विलासमयता, कटाक्ष, मादक, मन्द गति र यौवनको परिपूर्णता नै यक्षिणीको सही स्वरूप हो र यसै लक्षणबाट कसैको समीप यक्षिणी उपस्थित भएकी हुन् कि होइनन् भनेर थाहा पाउन सकिन्छ ।

**विभिन्न ठाउँमा यक्षिणीहरूको मूर्ति–**

भारतका भारहुत, साँची र मथुरामा यक्षिणीहरूका चित्र कुँदिएका पाइन्छन् । प्रायः स्तुपहरूको खम्बामा पाइने चित्रमा यक्षिणीहरूलाई मुस्कुराइरहेको, नग्न र हत्केलाले रूखको हाँगालाई समातेको देखाइएको छ । यिनीहरूको चित्र, मूर्तिलाई

पाटन मंगलबजारस्थित शिव मन्दिरको वेदीको कुनामा रहेको यक्षिणी मूर्ति

प्राय: वक्ररूपमा देखाएको पाइन्छ। नयाँ दिल्लीस्थित रिजर्भ बैंक अफ इन्डियाको प्रवेशद्वारमा पनि यक्षिणीको कंकाल राखिएको छ । त्यहाँ लेखिएको छ– 'प्रोस्पेरिटी थ्रु एग्रिकल्चर' अर्थात् कृषिद्वारा समुन्नति। भारतको पटनाको दीदारगंज, भारहुतको वेदिका स्तम्भमा शुगकालको शालभंजिका मुद्रामा कुँदिएका यक्षिणी[१]का सुन्दर मूर्तिहरू पनि अद्यावधि देख्न सकिन्छ। भारतका विभिन्न ठाउँमा पाइएका यक्षिणी मूर्तिहरूका आकार, प्रकार, प्राचीनता फरक-फरक प्रकृतिका छन् । त्यस्तै भारतको मध्य प्रदेशमा पनि यक्ष-यक्षिणीहरूका मूर्तिहरू पाइन्छन्[२]। दक्षिण भारतमा यक्षिणीहरूलाई सुन्दरताका लागि स्मरण गरिन्छ । केरलाका प्रसिद्ध कथा, कहानीहरूमा यक्षिणीलाई पात्रको रूपमा उभ्याइएको पाइन्छ भने आधुनिक मलयालम सिनेमाहरूमा पनि यक्षिणीलाई विषयवस्तु बनाएर पस्कने गरेको पाइन्छ ।

नेपालको सन्दर्भमा हेर्ने हो यक्षिणीका चित्र, मूर्तिहरूलाई विस्तृत रूपमा खोजेर हेर्नुपर्ने आवश्यकता देखिन्छ । नेपाली वास्तुकलाले युक्त ढुङ्गेधाराहरूमा प्रायश: यक्षिणीहरूको चित्रलाई अवलोकन गर्न सकिन्छ । पाटनका राजा श्रीनिवास मल्लको समयमा उहाँका मन्त्री भगीरथ भैंयाले हालको मङ्गलबजारमा बनाउन लगाएको मूर्तिले मन्दिर थामिरहेको देखिन्छ[३]। यो भगवान् शिवको मूर्ति हो र शैलीगत विशेषताले हेर्ने हो भने यो मन्दिर गुम्बज आकृतिको छ । प्रसिद्ध कृष्ण मन्दिरको दक्षिणतिर र चन्द्र शमशेरकी अर्धाङ्गिनीको सालिकको पछाडिपट्टि रहेको यो मन्दिरमा नित्य पूजा पनि हुने गरेको पाइन्छ। खोजी पस्ने हो भने काठमाडौँ र भक्तपुरका विभिन्न स्थानमा पनि यक्षिणीहरूको चित्र, मूर्ति भेटाउन नसकिने होइन । यसका लागि त वृहत् खोजीको आवश्यकता पर्दछ। त्यस्तै कतिपय अन्य देशमा पनि यक्ष-यक्षिणीको सम्बन्धमा खोजी हुनु आवश्यक देखिएको छ ।

**यक्षिणीसम्बन्धी आधुनिक खोज–**

नोर्दिक आर्यनहरूको दिव्य लोकलाई पाँच भागमा विभाजित गरेर प्रस्तुत गरिएको पाइन्छ । यी पाँच भूभागमा विभिन्न जातिले राज्य गरी बसोबास गरेका थिए। पहिलो लोकमा देव, दोस्रोमा नागहरूले राज्य गरेजस्तै यक्षिणीहरू तेस्रो लोकमा बस्दछन् । यक्षलोकमा पर्ने पश्चिमका कुमाउ, गढवाल र पूर्वका डोटी र जुम्ला हुन्। नेपालको खप्तड क्षेत्र नै यक्षिणीहरूको मुख्य भूमि हो जहाँ यक्षराज कुबेरको राजधानी कंचनपुरी अवस्थित छ । कंचनपुरी अलकापुरीभन्दा उति टाढा छैन ।[४]

खसहरू ककेसस पर्वतबाट नेपाल र भारतमा झरेको अथवा क्यास्पियन सागरको क्षेत्रबाट आएको अनुमान गरिन्छ। खसहरूलाई बलिया र घुमन्ते

## छत्तीस यक्षिणीहरू

'उड्डामरेश्वर तंत्र'का अनुसार छत्तीस यक्षिणीहरूको नाम यसप्रकार छ–

| | | |
|---|---|---|
| **१. विचित्रा** | **१३. चन्द्री** | **२५. नती** |
| **२. विभ्रमा** | **१४. मशाना** | **२६. कामेश्वरी** |
| **३. हंसी** | **१५. वातायक्षिणी** | **२७. अज्ञात** |
| **४. भिशानी** | **१६. मेखला** | **२८. अज्ञात** |
| **५. जनरञ्जिका** | **१७. विकला** | **२९. मनोहरा** |
| **६. विशाला** | **१८. लक्ष्मी** | **३०. प्रमोदा** |
| **७. मदना** | **१९. मालिनी** | **३१. अनुरागिनी** |
| **८. घंटा** | **२०. शतपत्रिका** | **३२. नखकेशी** |
| **९. कलाकर्णी** | **२१. सुलोचना** | **३३. भामिनी** |
| **१०. महाभाया** | **२२. शोभा** | **३४. पद्मिनी** |
| **११. महेन्द्री** | **२३. कपालिनी** | **३५. स्वर्णावती** |
| **१२. शंखिनी** | **२४. वारायक्षिणी** | **३६. रतिप्रिया ।** |

जातिमा लिइन्छ । कूर्मपुराणमा यी खसहरूलाई कश्यप मुनिका सन्तान भनिएको छ । गोरा र अग्ला खसहरूले हम्मु रवीको शासनपछि बेबिलोनमा आक्रमण गरे (३४०० वर्षअघि) । यिनै खसहरू नै वर्तमान यक्षिणीहरू हुन् ।[५]

नेपालको खप्तड क्षेत्र सिद्धहरूको बाहुल्यता भएको क्षेत्र मानिन्छ । वायु पुराण र मार्कण्डेय पुराणमा खस र स्वर्णभूमिको बारेमा उल्लेख पाइन्छ । महाभारतमा खसहरूले राजा युधिष्ठिरका लागि सुन ल्याएको प्रसंग आउँछ । यो सुन उनीहरूले स्वर्णभूमिबाट ल्याएका थिए । खस र यक्षहरू त्यतिबेला कैलाश पर्वत र सुदूर पश्चिम नेपालको नजिकै क्षेत्रमा बस्दथे । पौराणिक ग्रीक इतिहासमा दक्षिण-पश्चिम तिब्बतमा बस्ने खसहरूलाई 'Kassites' र 'Huna' भन्दथे । यिनीहरूलाई नै 'Hepthalites' भनिएको पाइन्छ । अहिले पनि सुदूर पश्चिम नेपाल र कुमाउमा 'Huniyas' शब्द प्रचलित छ । केही लेखकहरूले ' Hepthalites' र 'Hittis'लाई खसको अर्को जातिको रूपमा लिएका पाइन्छ । केही लेखकहरूको तर्क पाइन्छ कि यक्षहरू नै पूर्वका खसका सन्तान हुन् । विभिन्न पुराणहरूमा यक्षराज कुबेरका सेनाध्यक्ष मणिग्रीवले पश्चिम तिब्बतमा राज्य गरेको प्रसङ्ग पाइन्छ । मणिग्रीव जातिलाई कोशी क्षेत्र हुँदै नेपाल प्रवेश गरेको अनुमान गरिएको पाइन्छ ।

# चौबीस यक्षिणीहरू

जैन पंथमा चौबीस यक्षिणीहरूको वर्णन पाइन्छ । 'तिलोयापन्नती' (प्रतिष्ठासरसङ्ग्रह) र 'अभिधनचिन्तामणि'मा ती चौबीस नाम यसप्रकार छन्–

**१. चक्रेश्वरी**
**२. रोहिणी, अजितबाला**
**३. प्रजनप्ती, दुरीतारी**
**४. वज्रशृंखला, काली**
**५. वज्रांकुशा, महाकाली**
**६. मनोवेगा, श्यामा**
**७. काली, शान्ता**
**८. ज्वालिनी, भृकुटी**
**९. महाकाली, सुतारका**
**१०. मानवी, अशोका**
**११. गौरी, मानवी**
**१२. गान्धारी, चन्दा**
**१३. वैरोती, विदिता**
**१४. अनन्तामती, अंकुशा**
**१५. मानसी, कन्दर्पा**
**१६. महामन्सी, निर्वाणी**
**१७. जया, बाला**
**१८. तारादेवी, धारिणी**
**१९. विजया, धारणप्रिया**
**२०. अपराजिता, नरदत्ता**
**२१. बहुरुपिणी, गान्धारी**
**२२. अम्बिका अथवा कुशमन्दिनी**
**२३. पद्मावती**
**२४. सिद्धयिका ।**

पुराणहरूमा कुबेरको राजधानी अलकापुरीलाई कैलाशको बायाँपट्टि चित्रण गरिएको छ । प्राचीन कवि कालीदासले पनि अलकापुरी कैलाशको नजिक भएको उल्लेख गरेका छन् । कालिदासले लेखेको अलकापुरी र कुबेरको कंचनपुर कैलाशको नजिक रहेका छन् ।[६] देवराज इन्द्रसँग अलकापुरीको सम्बन्ध अत्यन्तै निकट भएकोले यो तर्कसङ्गत पनि छ कि कन्चनपुरी (स्वर्णशहर) को राजधानी स्वर्णभूमि थियो । स्कन्दपुराणमा मानस खण्डको प्रसङ्ग पाइन्छ जुन यक्षराज कुबेरको शहर उत्तर दिशाको मालिकादेवी पर्वतको नजिक रहेको छ र मालिकादेवीको मन्दिर मालिका पर्वतको शिरोभागमा अवस्थित छ । मालिका पर्वत नेपालको बाजुरा जिल्लाको खप्तड राष्ट्रिय निकुञ्ज र रामरोशन क्षेत्र (अछाम) को अति नजिकमा छ । त्यस्तै, कैलाश पर्वत बझाङको सीधा उत्तर धुलीमा पर्दछ । धुली सैपाल पर्वतको दक्षिण-पश्चिम र खप्तड राष्ट्रिय निकुञ्जको सीधा उत्तरमा अवस्थित छ ।

**जैन पन्थमा यक्षिणी–**

जैनहरू तीर्थंकरलाई पूजा गर्दछन् । समयको गतिसँगसँगै विभिन्न देवीदेवताहरूको पूजा पनि जैनहरूले गर्न थालेको पाइन्छ । यस क्रममा जैन मन्दिर हरूमा यक्ष र यक्षिणीको पूजा हुन थालेको छ । जैनहरूको विश्वास रहेको पाइन्छ कि देवराज इन्द्रले यक्ष-यक्षिणीहरूलाई तीर्थंकरको सेवार्थ नियुक्त गरेका हुन् । त्यसैले यक्ष-यक्षिणीहरू सधैँ जिनसको वरिपरि पाइन्छन् । मन्दिरमा जिनसको दायाँपट्टि यक्ष र बायाँपट्टि यक्षिणीलाई राखिएको पाइन्छ । शुरु-शुरुमा यक्ष-यक्षिणीहरू जिनसको भक्तका रूपमा मात्र लिइन्थे तर आजभोलि जिनससँगसँगै यिनीहरूको पनि पूजाआजा हुन्छ । तत्काल परिणामका लागि जैनहरूले यक्ष-यक्षिणीहरू पूज्दछन् । आत्मसेवी

जैनहरूले यक्ष-यक्षिणीहरूलाई आफ्नो मन्दिरमा स्थान दिएका छन् । केही यक्षिणीहरू आफ्ना भक्तहरूलाई धन-सम्पत्तिले भरपूर गर्दछन् । त्यसैले उनीहरू प्रसिद्ध हुन गए र तिनीहरूको मूर्तिहरूले जैन मन्दिरहरूमा स्थान पाए । जैनहरू बच्चा र धनको इच्छाले, भय, रोगव्याधिबाट मुक्त हुनका लागि यक्ष-यक्षिणीहरूलाई विभिन्न कुराहरू चढाउँछन् । सांसारिक इच्छाहरूका लागि मानिसहरू यक्ष-यक्षिणीहरूको भक्ति गर्दछन् जुन इच्छाहरू वीतराग जिनको भक्तिबाट पाउन भने सकिन्न । त्यसैले दसौं र तेह्रौं शताब्दीबीचमा यक्ष सरभानुभूति (सरवाना) र यक्षिणीहरू चक्रेश्वरी अम्बिका (यिनलाई अप्रतिचक्र पनि भनिन्छ, आदिनाथ ऋषभदेवका भक्त यिनको रङ सुनौलो छ र बाज यिनको बाहन हो । यिनका छवटा हात छन्), पद्मावती (यिनी भगवान् २३ औं तीर्थंकर पारसनाथमा समर्पित छिन् र सुनौलो यिनको रङ हो । यिनका चार हात छन्) र ज्वालामालिनीको भक्ति गर्नेहरू बढे । उनीहरूको पूजनको लागि मात्रै कैयौं मन्दिरहरू बनाइए । यी मन्दिरहरू अहिले पनि देख्न सकिन्छ । त्यस्तै २२ औं तीर्थंकर भगवान् नेमिनाथ समर्पित हरियो रङकी जो सिंहमाथि विराजमान हुन्छिन् अम्बिका देवी, सुरक्षाका लागि पूजिने घण्टाकर्ण वीर, सांसारिक इच्छाहरूको परिपूर्तिका लागि पूजिने नकोदा भैरव, पर्वत स्वरूपका भोजियाजी आदि पनि जैनहरूमा प्रचलित यक्ष-यक्षिणीहरू हुन् । स्थानकवासी र श्वेताम्बरका तेरापंथीहरू मूर्ति पूजा भने गर्दैनन् ।

प्राचीन ग्रन्थहरू स्थानअङ्गसूत्र, उत्रध्यायनसूत्र, भगवतीसूत्र, तत्त्वार्थसूत्र, अन्तगदाससाओसूत्र र पौमाकरियामा यक्षहरूको सन्दर्भ थुप्रै ठाउँमा आएको पाइन्छ । हरिवंशपुराणमा (७८३ ए.डि.) मा यिनीहरूको सन्दर्भ शासनदेवताको रूपमा लिइएको र मणिभद्र र पूर्णभद्रलााई अर्धदेवको प्रमुखका रूपमा चित्रण गरिएको पाइन्छ । मणिभद्रकी अर्धाङ्गिनी बाहुपुत्रीका हुन् जसका धेरै छोराहरू थिए । हरिवंशपुराणमा यक्ष-यक्षिणीहरूलाई रोगव्याधि, ग्रह, राक्षस, भूत, पिशाच हटाउने शक्तिले युक्त दर्शाइएको छ ।

यक्षहरू बस्ने ठाउँलाई चैत्य अथवा आयतन भनेर पनि चिनिन्छ । यिनीहरू जहाँतहीं पनि रहन सक्दछन् । शहरबाहिर, पहाड, पर्वत, रूख, शहरको मुख्य प्रवेशद्वार, पानीको भण्डारण गरिएको ठाउँ, घर र महलहरूमा यिनीहरू रहन सक्दछन् । यक्ष अंगुलीमाल पहिले रूखमा रहन्थे र सुध्रेपछि शहरको प्रवेशद्वारमा बसेका थिए ।

### यक्षिणी साधना–

यक्षिणी सिद्धि तन्त्रज्ञहरूको लागि कुनै नौलो कुरा होइन । विभिन्न यक्षिणीहरूको साधना भिन्न भिन्न ढंगले

**काठमाडौँको जैन भवनमा रहेको भगवान् महावीरको मूर्तिको दायाँ बायाँ राखिएका यक्ष यक्षिणी** (गोलो घेरा भित्रको)

गर्ने विधान उड्डीश तंत्र, दत्तात्रेय तंत्र, भूत डामर तंत्र इत्यादि ग्रन्थहरूमा मिल्दछ र यसैप्रकार अलग-अलग यक्षिणीहरूलाई बेग्लाबेग्लै रूपमा सिद्ध गर्ने विधि पनि पाइन्छन् । भगिनी, जननी, पुत्रबधू, पत्नी अथवा प्रेयसी...यी रूपहरूमा यक्षिणीको साधना गरिन्छ ।

यक्षिणीहरू स्वरूपमा आनन्दप्रद र प्रचुर धनदायक हुन्छन् किनकि यिनीहरू जुन वर्गका हुन् त्यसै वर्गका अधिपति कुबेर हुन् । शास्त्रमा प्रमाण पाइन्छ कि यक्षिणी सिद्ध साधकलाई यक्षिणीले कुबेरको गृहबाट धन ल्याएर प्रदान गर्छिन् । यक्षिणी साधनाको यो एउटा गोपनीय पक्ष हो र साधकलाई यस साधनाद्वारा स्वत: नै कुबेर साधनाका समस्त लाभ प्राप्त हुन जान्छन् । दत्तात्रेय तंत्रमा स्पष्टरूपमा वर्णित छ कि यक्षिणी साधना सम्पन्न गर्नुपूर्व कुबेरको पूजा गर्नाले यक्षिणी प्राप्ति त हुन्छ नै साथसाथै जीवनपर्यन्त कहिले पनि नसुक्ने धनको स्रोत एवं भगवान् शिवको सुरक्षा-चक्र पनि प्राप्त हुन्छ । जय गुरुदेव !

सन्दर्भ ग्रन्थहरू– १. यक्ष-यक्षिणी, वीणा पौडेल, गोरक्ष निखिल बाणी, पृ. २९, भाद्र २०६१, २. यक्षिणी उपासक यस्ता पनि थिए, स्वामी प्रपन्नाचार्य, पृ. १०, पूर्ववत्, ३.शिव परिवार र यक्ष-यक्षिणी, संस्कृतिविद् मदनमोहन मिश्र, पृ. २३, पूर्ववत्, ४. प्राचीन भारत मे, डा. आर सी. मजुमदार, पृ. ५, ५. हिमालयन गजेटियर भोलुम ३, १८८२, ६. पूर्ववत्, पृ. १५९ ।

# यक्षिणीसँगको पुनर्मिलन

उनलाई एकपटक मेरो आँखाले नियाल्यो, म अवाक् भएँ, मेरो हृदयले धड्कन बन्द गरिदिए जस्तो लाग्यो, शरीर निष्प्राण भएजस्तो भयो... यस्तै थियो ती अठार वर्षीया बालाको सौन्दर्यमयी गौर वर्णी शरीर जसलाई एकपटक देखेपछि म स्तम्भित भएर उभिरहेँ र उनीलाई आफ्नो बनाउने सपना देख्ने धृष्टता गर्न लागेँ । मेरो मानसपटलमा तिनको छवि जस्तो थियो उस्तै अंकित भएको थियो । मलाई यस्तो लागिरहेको थियो कि यसै सौन्दर्यको प्रतीक्षामा म वर्षौंदेखि भट्किरहेको थिएँ जुन आज अचानक नै स्वप्नरूपमा मेरो साम‍ु दृष्टिगोचर भएको छ । तर यो सपना नभई शायद वास्तविकता नै थियो– मलाई यसको आभास तब भयो जब उनी मेरो बायाँपट्टिको सीटमा बसिन् र मनमोहक मुस्कानका साथ मलाई हेरिन्... म होशमा रहनै सकिन । किन हो कुन्नी उनलाई बारम्बार हेर्ने इच्छा भइरहचो छ मलाई । तर मर्यादावश केही अप्ठ्यारो पनि भइरहेको थियो । तर पनि मैले उनलाई एकटक हेरिरहेँ । उनी पनि मलाई मादक मुस्कानका साथ प्रेममयी दृष्टिले हेर्न उत्सुक भइरहेकी थिइन् । तर संकोचवश आफ्नो परेलालाई कहिले झुकाउँथिन् त कहिले बिस्तारै चुप लगेर मलाई हेर्थिन् ।

**....किनकि उनको शरीरबाट प्रवाहित हुन्थ्यो मादक, नशालु हावा औ उनको शरीरबाट निस्किन्थ्यो गुलाबको फुलको सुवास ।**

उनले मलाई यसरी किन हेरिरहेकी छिन् भन्ने कुरा मैले बुझ्न सकिरहेको थिइन । उनको हेराइमा मलाई यस्तो आभास हुन्थ्यो कि मसँग उनको धेरै वर्षदेखिको परिचय छ । उनको आँखामा यस भावलाई पढेर मेरो मन यो जान्न व्यग्र भयो । तर पनि म मौन नै रहेँ । पच्चीस मिनेटसम्म सँगै यात्रा गरेपछि केही नबोली हामी दुवै आ-आफ्नै दिशामा हिँड्यौं ।

त्यसपछि त हरेक क्षण मेरो मन उनलाई हेर्न बेचैन हुन लाग्यो । यस्तो महसुस हुन्थ्यो कि उनी मेरी प्रेमिका हुन् जो शायद मसँग बिछोडिएकी हुन् । त्यस रात म चैनसँग एक क्षण पनि सुत्न सकिन । यिनै विचारहरूको उथलपुथलले मेरो मनमा उनीसँग भेट्ने उत्सुकता उत्पन्न गरिदियो ।

त्यसपछि त मेरो जीवनका यस्ता स्थितिहरूमा उनीसँग साक्षात्कार भइरहचो जब म तनावग्रस्त हुन्थेँ वा कुनै आपत आउन लागेको अवस्था हुन्थ्यो । यस्तो विषम क्षणमा म उनलाई आफूसामु पाउथेँ । हरेक पटक मलाई ती समस्याहरूबाट मुक्त गरेर उनी अदृश्य हुन्थिन् । मेरो मन फेरि विचलित हुन्थ्यो र एउटै प्रश्न मेरो मानसपटलमा उब्जन्थ्यो कि आखिर यिनी को हुन् जसले आपत, प्रतिकूलता र समस्याहरूको सागरबाट मलाई निकालेर बारम्बार लुप्त हुन्छिन् ।

हरेक पटक म उनीसँग कुरा गर्न अगाडि बढ्थेँ तर मेरो पाइला असफल भएर रोकिन्थ्यो, उनी गायब भैसकेकी हुन्थिन् । यस्तो खेल लगातार सात-आठ महिनासम्म चल्दै रह्यो । उनले कहिले पनि मेरो अहित चाहिनन् । हरेक पटक मेरो सहायता नै गरिन् र कठिनभन्दा कठिन परिस्थितिमा पनि मलाई बचाइन् । उनले हरेक दृष्टिले मेरो पूर्ण सहायता नै गरिन् । जब

मलाई धनको आवश्यकता हुन्थ्यो, अकस्मात् नै धन आउँथ्यो । म निराश भएको बेला वा कुनै तनावले ग्रस्त हुँदा अचानक उनी मेरो साम‍ु उपस्थित हुन्थिन् । म उनलाई हेरेर सारा दु:ख, तनाव बिर्सन्थेँ र त्यसको निदानको उपाय पनि मलाई प्राप्त हुन्थ्यो । उनले ठूलठूला दुर्घटनाहरूबाट पनि मलाई बचाइन् जसबाट बच्नु कठिन मात्र होइन असम्भव थियो ।

हेर्दा त उनी एउटी साधारणझैं लाग्ने पूर्ण यौवनले भरिपूर्ण एउटी बाला थिइन् जसको सौन्दर्य कसैलाई पनि बेसुध गर्नका लागि पर्याप्त थियो । उनको सागरजस्तो गहिरो आँखा, सानो नाक, गुलाबका पातजस्तै थरथराएका ओठ, लहराएको केश र मृगको जस्तो हेराई कुनै पनि पुरुषलाई आफ्नो नयनले बाँध्न समर्थ थियो, कुनै पनि यौवनवान् व्यक्तिलाई आफूतिर खिँच्न सक्षम थियो किनकि उनको शरीरबाट प्रवाहित हुन्थ्यो मादक, नशालु हावा औ उनको शरीरबाट निस्किन्थ्यो गुलाबको फुलको सुवास ।

उनको सौन्दर्यको कुनै पनि गुणले उनलाई कुनै साधारण स्त्रीको श्रेणीमा उभ्याउँदैनथ्यो । उनको अनुहारको दिव्य प्रकाश जुन हरेक क्षण स्फुटित भइरहन्थ्यो, त्यो अद्‌भुत र आश्‍चर्यचकित गर्ने थियो, मानौं सूर्यको प्रकाश चारैतिर आफ्नो किरण फिँजाएर वातावरणलाई प्रकाशित गरिरहेको छ... र हरेक पटक उनको मिलन र हाँसेर हिँड्ने स्वभावले मेरो मनमा प्रेमको अंकुरण गराइरहेको थियो ।

जब उनी मसँग हुन्थिन् त्यस बेला मादकता र माधुर्यले वातावरण ओतप्रोत हुन्थ्यो । उनी मसँग भएको बेला एउटा मीठो वर्षाले सारा तन-मनलाई आप्लावित गरेर स्मृति-इतिहासको अमिट अक्षर बन्न जान्थ्यो... यस्तो सुन्दर क्षण नै जीवनको साथर्कता हो, र यस्तो क्षण नै पूरा जीवनभरि रहिरहन सकोस् । यसैले म आफ्ना पूज्य गुरुदेवको चरणमा उपस्थित भएँ र उहाँलाई मनको पूरै व्यथा भनेँ ।

यो सबै व्यथा भन्दाभन्दै मेरो आँखाबाट अश्रुकण छल्कन लाग्यो जसले पूज्य गुरुदेवको चरणलाई भिजायो किनकि म अब एक पल पनि उनीबिना बाँच्न नसक्ने भएको थिएँ जसलाई गुरुदेवले राम्ररी बुझ्नुभएको थियो । गुरुदेवले मुस्कुराएर मतिर हेर्नुभयो र मलाई आश्‍चर्यचकित गरिदिने एउटा रहस्यलाई उद्‌घाटित गर्नुभएर उहाँले मलाई चकित पारिदिनु भयो जुन रहस्य मेरो पूर्वजन्मसँग सम्बन्धित थियो ।

*उहाँले भन्नुभयो कि पूर्वजन्ममा पनि म उहाँकै शिष्य थिएँ र उहाँकै प्रांगणमा रहेर नै मैले विशिष्ट साधनाहरूमा सिद्धि प्राप्त गरेको थिएँ । साधनाहरूमध्ये एउटा साधना 'सौन्दर्या यक्षिणी साधना' थियो जसलाई मैले प्रेमिकाको रूपमा सिद्ध गरेको थिएँ । उनी मेरी प्रेमिकाको रूपमा सिद्ध भइसकेपछि उनले मलाई आफ्नो सामीप्यता प्रदान गरिन् तर उनीप्रति केही अशिष्टतापूर्ण व्यवहार हुन गएकोले उनी मसँग रिसाइन् । उनले भनिन्– 'म अब कहिले पनि आउँदिन ।' तर केही समय उनीसँग आनन्दपूर्वक बिताएको हुनाले मलाई आफ्नो गल्तीको महसुस भयो । फेरि साधनाद्वारा उनलाई प्राप्त गर्ने निर्णय गरेर मैले त्यो अद्वितीय साधना सम्पन्न गरेँ । तर मलाई सफलता हात लागेन । मैले गुरुदेवसँग प्रार्थना गरेँ– 'म पुन: उनलाई प्रेमिकाको रूपमा सिद्ध गर्न चाहन्छु किनकि उनी गएदेखि विभिन्न प्रकारका विपरीत परिस्थितिहरूले मलाई जकडे र जब म शारीरिक, मानसिक तथा आर्थिक दृष्टिले पनि कमजोर भएँ तब मलाई ज्ञात भयो कि मेरो जीवनको सफलता र पूर्णताको श्रेय त ती यक्षिणीलाई नै जान्छ जसले मलाई हरेक दृष्टिले सुख, सम्पन्नता र आनन्द प्रदान गरेकी थिइन् ।*

*मैले गुरुदेवलाई यस साधनामा पुन: सफलता नमिल्नुको कारण सोधेँ । उहाँले भन्नुभयो– 'तिमीले त्यस यक्षिणीसँग अत्यधिक माधुर्य, कोमलता र प्रेममय व्यवहार गर्नुपर्ने थियो किनकि अभद्रतापूर्ण व्यवहारको कारण आफूले दिएको सुख, सम्पन्नता र आनन्द उनले फिर्ता लैजान्छिन् र त्यस साधकको जीवनबाट सधैं-सधैंका लागि टाढा हुन्छिन् ।'*

*गुरुदेवले भन्नुभयो– 'तिमीले आफ्नो गल्तीलाई महसुस गर्‍यौ, यसैले म तिमीलाई आशीर्वाद दिन्छु कि तिमीलाई उनी प्रेमिकाको रूपमा प्राप्त होऊन् तर यो यस जीवनमा त सम्भव छैन, उनी अपमानित भएर गएकी छिन्, त्यसैले म पनि उनलाई फर्केर आउन बाध्य पार्दिन, तिमीले यस जन्ममा त यस कुराको प्रायश्चित गर्नुपर्नेछ । तिमी शिष्य भएको हुनाले र तिमीले मेरो हरेक आज्ञालाई मानेको हुनाले म तिमीलाई यो आशीर्वाद दिन्छु कि यसपछिको जीवनमा उनीसँग तिम्रो भेट अचानक नै हुनेछ र हरेक क्षण उनी तिम्रा प्रतिकूलताहरू, समस्याहरूमा छायाँजस्तै तिमीसँग नै रहनेछिन् जसबाट तिमीलाई जीवनमा कुनै प्रकारको कठिनाइ हुने छैन । तर जबसम्म तिमीले पुन: मकहाँ आएर 'सौन्दर्या यक्षिणी साधना' सिद्ध गर्दैनौ, तबसम्म तिमीले उनलाई प्राप्त गर्न सक्दैनौ ।'*

यस पूर्वजन्मकृत घटनालाई सुनेर म आश्‍चर्यचकित भएँ र शीघ्र नै गुरुदेवसँग आशीर्वाद लिएर सौन्दर्या यक्षिणी साधना सिद्ध गरेर आफ्नी प्रेमिकाको रूपमा उनलाई प्राप्त गरेँ । अहिले जब म उनलाई याद गर्दछु तब उनी मेरो सामु साकार हुन्छिन् । (मंत्र-तंत्र-यंत्र विज्ञान, मार्च १९९५)

❑

# धन वर्षाउने धनदा यक्षिणी

***(परमपूज्य गुरुदेवले लगाउनु भएका शिविरहरुमा विभिन्न साधनाहरु प्राप्त गर्ने सौभाग्य धेरै शिष्यहरुले पाउनु भएको प्रसङ्गलाई उल्लेख गरिरहनु नपर्ला । साधनाबाट धेरैले सिद्धिहरु प्राप्त गर्दै आफ्नो जीवनलाई धन्य गरेको सन्दर्भमा एकजना साधकले एउटा शिविरमा धनदा यक्षिणी साधना प्राप्त गरेर आफूलाई संसारको सौभाग्यवान् व्यक्तिमा रुपान्तरण गरेको भएको प्रसङ्गलाई यहाँ उल्लेख गरिएको छ)***

'रुद्रयामल तंत्र'मा दारिद्रच नष्ट गर्ने तथा अपार सम्पत्ति प्राप्त गर्ने उपाय स्पष्टरूपमा उल्लेख गरिएको छ । धनदा यक्षिणीलाई मन्त्रको माध्यमबाट प्रसन्न गरेर कुनै पनि व्यक्तिले अटुट सम्पत्ति, भवन, वाहन, ऐश्वर्य, मान, प्रतिष्ठालाई प्राप्त गर्न सक्दछ । इन्द्रजस्तै अत्यन्तै वैभवपूर्ण जीवन व्यतीत गर्न सक्दछ ।

प्रणम्य शिरसा गौरी प्रोवाच शशिशेखरम् ।

येन कल्पेन दारिद्रचं विनश्येच्च तद् वद ॥

शिवजीलाई प्रणाम गरेर पार्वतीले सोध्नुभयो– 'हे महादेव ! कुनै यस्तो उपाय बताउनुहोस् जसबाट मनुष्यको दरिद्रता सदाका लागि समाप्त हुन सकोस् ।'

तब शिवजीले भन्नुभयो–

पुरा विश्वसृता प्रोक्ता कुबेराय महात्मने ।<br>
विद्या दारिद्रचसंहंत्री यक्षिणी पापखंडिनी ॥<br>
तेन सा तु समाख्याता यक्षिणी सुरसुंदरी ।<br>
ततो निधिवराणं तु नायको निश्चितं भवेत् ।<br>
(रुद्रयामल तंत्र)

धनदा यक्षिणी साधना सम्पन्न गर्नु मेरो जीवनको रोमाञ्चक क्षण थियो । आज पनि ती क्षणहरूलाई सम्झिँदा मेरो आँखामा आँसु छचल्किन्छ । पूज्यश्रीसँग जोडिएको धेरै समय भएको थिएन । उहाँको पत्रिका पढेर मलाई पनि यक्षिणी साधना सम्पन्न गर्ने लहड आयो । यसैबीच पूज्यश्री दिल्लीमा हुनुहुन्छ भन्ने मलाई थाहा भयो । अनि म भोलिपल्टै दिल्ली पुगेँ । त्यहाँ त 'धनदा यक्षिणी साधना' सम्पन्न हुन लागिरहेको रहेछ ।

मेरो इच्छा अब चाँडै पूर्ण हुनेछ भन्ने मलाई लाग्यो । त्यहाँ प्रातः पूज्यश्रीसँग भेटेपछि म आफ्नो एउटा आवश्यक कार्यले निस्कें किनकि साधनाको समय साँझ तोकिएको थियो । अतः म निश्चिन्त थिएँ कि साँझसम्म त म फर्किनेछु । तर मैले दुर्भाग्यको सामना गर्नु पऱ्यो । फर्केर गुरुधाम आउने क्रममा मेरो ट्याक्सी जाममा फँस्यो । म अत्यन्त बेचैन भइरहेको थिएँ । जब म गुरुधाम पुगेँ, साधना आरम्भ भइसकेको थियो, हल पूरै भरिएको थियो । मेरो आँखामा आँसु छचल्कियो । काउण्टरमा सोध्दा थाहा भयो कि साधना सामग्री समाप्त भइसक्यो । म अत्यन्तै दुःखी मनले त्यहाँबाट फर्कें र पूज्यश्री भेटिनु भएमा आफ्नो स्थितिलाई निवेदन गरेर, प्रार्थना गरेर यक्षिणी साधना सिद्ध गर्न पाइने आशाले भोलिपल्ट फेरि फर्केर आएँ । तर कारणवश मैले उक्त दिन पनि साधनामा भाग लिन पाइन ।

रातभरि मैले पूज्यश्रीको प्रवचन सुनिरहेँ जसको कारण मेरो साधना गर्ने इच्छा झन् तीव्र भइरहेको थियो । मलाई बारम्बार प्रवचन स्मरण भइरहेको थियो, उहाँको शब्द गुञ्जिरहेको थियो ।

उहाँले यक्षिणी साधनाको सम्बन्धमा भन्नुभएको थियो–

'यो साधनाले साधकको जीवनमा समस्त धनसम्बन्धी इच्छाहरू पूर्ण गर्छ । यो साधना सम्पन्न गरेर साधकले आफ्नो जीवनबाट दरिद्रतालाई कोसौं टाढा भगाउँछ र सुख समृद्धि तथा ऐश्वर्ययुक्त जीवन प्राप्त गर्दछ, यक्षिणीले जीवनभरि साधकका अनेक कार्यहरूलाई सम्पन्न गर्दछिन् ।'

उहाँले भन्नुभएको थियो–'यक्षिणी नामबाट डराउनु पर्ने आवश्यकता छैन । यक्षिणी एउटा विशेष जातिसँग सम्बन्धित छ । देवताहरूका कोषाध्यक्ष कुबेर स्वयं पनि यसै जातिसँग सम्बन्धित छन् । अतः यक्षिणी सिद्ध गरेपछि धन-ऐश्वर्य आदि टाढा कसरी रहन सक्दछ र ? यक्षिणी सिद्ध भएपछि तिनी मित्रवत् हुन्छिन् जसको फलस्वरूप तिनले साधकको मार्गमा आउने स-साना बाधाहरू स्वतः नै समाप्त गरिदिन्छिन् । तर यसका लागि सबैभन्दा ठूलो आवश्यकता त यो छ कि तपाईंलाई स्वयंमा, आफ्नो गुरुमाथि तथा साधनामा पूर्ण विश्वास हुनुपर्दछ र साधना गर्ने दृढता

राख्नुपर्दछ। तब साधनालाई पूर्णरूपमा सिद्ध गर्न सकिन्छ।'

भोलिपल्ट पुन भारी मन लिएर गुरुधाम पुगेँ। पूज्यश्री दीक्षा दिइरहनु भएको थियो। दीक्षा समाप्त भइसकेपछि उहाँले मलाई भन्नुभयो– 'घर नफर्कीकन तिमी मेरो अफिसमा आउनू।'

म आश्चर्यचकित पनि भएँ किनकि यत्रो भीडमा पनि पूज्यश्रीले मलाई बोलाउनु भयो। अफिसमा पुगेर मैले आफूले आफैलाई रोक्न सकिन, मेरो आँखामा आँसु आयो।

उहाँले सोध्नुभयो– 'के भयो, किन रोएको ?'

एउटा बालक जुन प्रकारले आफ्नो बुबा समक्ष उभिन्छ, ठीक त्यसै प्रकारको अनुभूति मलाई भयो र मैले आफ्नो स्थिति उहाँलाई बताउँदै गएँ।

उहाँले मेरो कुरा ध्यानपूर्वक सुन्नुभयो। मलाई लाग्यो कि उहाँले मेरो दुर्भाग्यलाई परिवर्तित गर्नुभयो र पूर्ण विधि-विधानले मलाई यक्षिणी साधना सिकाउँदै भन्नुभयो– 'यदि कुनै बाधा आएमा मसित भेट्नू।'

मैले उत्साहपूर्वक घर गएर पूर्ण विधि-विधानबाट यस साधनालाई सम्पन्न गरेँ जसको फलस्वरूप मैले आफ्नो जीवनमा आश्चर्यजनक परिवर्तनको अनुभव गरेँ। ❑



## आश्रममा उपलब्ध सेवाहरू

- योग, ध्यान, हिप्नोटिज्म, आदि बारे अध्ययन, अनुसन्धान एवं परामर्श सेवा।
- मन्त्र शक्तिद्वारा हाम्रो दैनिक जीवनमा आइपर्ने विविध समस्याहरूको समाधान।
- फोटो थेरापीको माध्यमबाट असाध्य रोगहरूको उपचार।
- मन्त्र तन्त्रको माध्यमबाट साधनामा अघि बढ्न चाहने साधक साधिकाहरूलाई विशेष मार्गनिर्देशन।
- पूर्ण प्रामाणिकरूपमा विशेष प्रक्रियाद्वारा प्राण-प्रतिष्ठित यन्त्र, माला, आसनलगायत साधनाका लागि आव( श्यक सम्पूर्ण सामग्रीहरूको व्यवस्था।
- परमपूज्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको बारेमा अध्ययन अनुसन्धान एवं जानकारी चाहनेहरूका लागि गोरक्ष निखिल पुस्तकालयको व्यवस्था।
- विभिन्न किसिमका रोगहरूको उपचारका लागि विशेष तान्त्रिक हिलिङ्को व्यवस्था।

# चैत्र महिनाको सूक्ष्म काल विवरण

**आदरणीय पाठकवृन्द, विभिन्न महिनाका विभिन्न बारहरुमा पर्ने कालहरुको जानकारी तथा सूक्ष्म काल निर्णयका सम्बन्धमा गत अङ्कमा प्रकाशित गरिएको थियो । यस अंकमा चैत्र महिनामा पर्ने विभिन्न चारवटा कालहरुको पनि ५-५ मिनेटको अन्तरालको फलहरुलाई प्रस्तुत गरिएको छ जसलाई हेर्न सँगै दिइएको तालिकालाई आधार बनाउनु होला ।**

## चैत्र महिनाको महेन्द्र काल

१ देखि ५ मिनेटसम्म : शुभ कार्य एवं व्यापारको लागि सर्वथा अनुकूल छ । यस कालका स्वामी 'शिव' हुनुहुन्छ, कार्य प्रारम्भ गर्नुपूर्व धनियाँ खानु अनुकूल रहन्छ ।

६ देखि १० मिनेटसम्म : यात्राको दृष्टिले यस समयको विशेष महत्त्व छ, यस समयका अधिष्ठाता 'गणेश' हुनुहुन्छ, अत: गणेशको स्मरण गरेर यात्रा प्रारम्भ गर्नुपर्दछ । दूबो खाएर कार्य थाल्नु शुभ मानिएको छ ।

११ देखि १५ मिनेटसम्म : व्यापारको लागि यो समयको छनौट विशेष शुभ हुन्छ । यस समयकी अधिष्ठात्री 'लक्ष्मी' हुनुहुन्छ, दुग्ध प्रसाद लिएर कार्य प्रारम्भ गर्नु शुभ मानिएको छ ।

१६ देखि २० मिनेटसम्म : यात्रा, विजय कार्य, धन संग्रह, किनमेल र शुभ कार्यका लागि यो समय अनुकूल छ, यस समयका अधिष्ठाता 'ब्रह्मा' हुनुहुन्छ, पान खाएर कार्य प्रारम्भ गर्नु शुभ रहन्छ ।

२१ देखि २५ मिनेटसम्म : चुनाव, परीक्षा दिनु, सफलतासम्बन्धी कार्य, स्थिर कार्य तथा भाग्योदय हेतु यस समयको छनौट गर्नुपर्दछ । यस समयका स्वामी 'विष्णु' हुनुहुन्छ, चामल खाएर कार्य गर्नु विशेष शुभ मानिएको छ ।

२६ देखि ३० मिनेटसम्म : यात्रा, जुवा, सट्टा, भाग्य परीक्षा, मित्रता तथा लाभदायक कार्य आदिका लागि यो समय उचित छ, यस समयका स्वामी 'कार्तवीर्यार्जुन' हुनुहुन्छ, दही खानु शुभ मानिएको छ ।

३१ देखि ३५ मिनेटसम्म : उन्नति कार्य, विवाह, प्रणय, प्रेम प्रदर्शन, लाभ कार्य, खेल तथा यात्रा आदिका लागि यो समय शुभ छ, यस समयका अधिष्ठाता 'कामदेव' हुनुहुन्छ, मह खाएर कार्य प्रारम्भ गरिन्छ भने विशेष शुभ रहन्छ ।

३६ देखि ४० मिनेटसम्म: यात्रा, विवाह, व्यापार कार्य, मित्रता, उन्नति कार्य आदिका लागि यस समयको छनौट गर्नु पर्दछ । यस समयका अधिष्ठाता 'मरुत' हुनुहुन्छ, तिल भक्षण शुभ मानिएको छ ।

४१ देखि ४५ मिनेटसम्म: जुनसुकै प्रकारको यात्रा एवं सफलताका लागि यो समय विशेष शुभ एवं अनुकूल छ, यस समयका देवता 'सूर्य' हुनुहुन्छ । चिनी वा सख्खर खाएर यात्रा अथवा कार्य प्रारम्भ गर्नुपर्दछ ।

४६ देखि ५० मिनेटसम्म: यात्रा, शुभ कार्य, सगाई, विवाह मांगलिक कार्य, व्यापारिक कार्य तथा द्युत आदिका लागि यो समय शुभ छ, यस समयको देवता 'चन्द्र' हुनुहुन्छ, दही भक्षण शुभ मानिएको छ ।

५१ देखि ५५ मिनेटसम्म : जुनसुकै प्रकारको उन्नति, व्यापार, नोकरी तथा यात्रा आदिका लागि यस समयको छनौट गर्नु शुभ मानिएको छ । यस समयकी अधिष्ठात्री 'गौरी' हुनुहुन्छ, हरिद्रा (बेसार) खाँदा शुभ रहन्छ ।

५६ देखि ६० मिनेटसम्म : व्यापार, सफलता, शिक्षा, खेल, प्रणय-प्रसङ्ग, विवाह, यात्रा आदिका लागि यस समयको छनौट गर्नुपर्दछ । यस समयका देवता 'गौतम' हुनुहुन्छ, पान खाएर कार्य प्रारम्भ गर्नु शुभ मानिएको छ ।

## चैत्र महिनाको अमृत काल

१ देखि ५ मिनेटसम्म : यात्रालगायत महत्त्वपूर्ण र उन्नतिशील कार्यहरूको लागि यस समयको छनौट शुभ छ । यस समयका देवता 'रुद्र' हुनुहुन्छ, कार्य प्रारम्भ गर्नुपूर्व सख्खरको प्रयोग शुभ मानिएको छ ।

६ देखि १० मिनेटसम्म : परीक्षा, चुनाव, अन्तरवार्ता, नयाँ जागिर तथा यात्रा आदिको लागि समय शुभ छ । यस समयका अधिष्ठात्रा 'चन्द्र' हुनुहुन्छ, दही खानु शुभ रहन्छ ।

११ देखि १५ मिनेटसम्म : जुवा, व्यापार, यात्रा आदिका लागि समय उपयुक्त छ । यस समयको देवता 'शनि' हुनुहुन्छ, तील भक्षण गरेर कार्य प्रारम्भ गर्नु शुभ मानिएको छ ।

१६ देखि २० मिनेटसम्म : यात्रा, स्थायित्वसम्बन्धी कार्य, व्यापार प्रारम्भ मुहूर्त आदिका लागि यस समयको छनौट शुभ हुन्छ । यस समयकी देवी 'लक्ष्मी' हुनुहुन्छ, दूध

# चैत्र, वैशाख, श्रावण, भाद्र, माघ र फाल्गुण महिनामा पर्ने विभिन्न कालहरू

| आइतबार | | सोमबार | | मंगलबार | | बुधबार | | बिहीबार | | शुक्रबार | | शनिबार | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| *समय* | *काल* | *समय* | *काल* | *समय* | *काल* | *समय* | *काल* | *समय* | *काल* | *समय* | *काल* | *समय* | *काल* |
| ६:००-६:४८दिन | महेन्द्र | ६:००-७:३६दिन<br>*७:३०-९:००* | अमृत<br>*राहु* | ६:००-८:२४दिन | अमृत | ६:००-७:३६दिन | वक्र | ६:००-८:२४दिन | अमृत | ६:००-६:४८दिन | शून्य | ६:००-७:३६दिन | शून्य |
| ६:४८-१०:०० | अमृत | ७:३६-१०:४८<br>*७:३०-९:००* | वक्र<br>*राहु* | ८:२४-९:१२ | शून्य | ७:३६-९:१२ | अमृत | ८:२४-९:१२ | शून्य | ६:४८-१:१२<br>*१०:३०-१२:००* | अमृत<br>*राहु* | ७:३६-८:२४ | वक्र |
| १०:००-२:०० | वक्र | १०:४८-१:१२ | अमृत | ९:१२-१०:०० | वक्र | ९:१२-११:३६ | वक्र | ९:१२-१०:४८ | शून्य | १:१२-४:२४ | वक्र | ८:२४-९:१२<br>*९:००-१०:३०* | शून्य<br>*राहु* |
| २:००-५:१२<br>*४:३०-६:००* | शून्य<br>*राहु* | १:१२-३:३६ | वक्र | १०:००-१२:२४ | अमृत | ११:३६-१:१२<br>*१२:००-१:३०* | अमृत<br>*राहु* | १०:४८-१:१२ | अमृत | ४:२४-५:१२ | अमृत | ९:१२-१२:२४<br>*९:००-१०:३०* | अमृत<br>*राहु* |
| ५:१२-६:००<br>*४:३०-६:००* | अमृत<br>*राहु* | ३:३६-५:१२ | अमृत | १२:२४-३:३६<br>*३:००-४:३०* | शून्य<br>*राहु* | १:१२-२:००<br>*१२:००-१:३०* | शून्य<br>*राहु* | १:१२-४:२४<br>*१:३०-३:००* | वक्र<br>*राहु* | ५:१२-६:०० | शून्य | १२:२४-१:१२ | शुन्य |
| ६:००-६:४८रात्रि | शून्य | ५:१२-६:०० | शून्य | ३:३६-५:१२<br>*३:००-४:३०* | अमृत<br>*राहु* | २:००-३:३६ | वक्र | ४:२४-६:०० | अमृत | ६:००-७:३६रात्रि | वक्र | १:१२-२:०० | वक्र |
| ६:४८-७:३६ | महेन्द्र | ६:००-७:३६रात्रि | वक्र | ५:१२-६:०० | शून्य | ३:३६-४:२४ | महेन्द्र | ६:००-७:३६रात्रि | वक्र | ७:३६-८:२४ | शून्य | २:००-३:३६ | शून्य |
| ७:३६-८:२४ | शून्य | ७:३६-९:१२ | महेन्द्र | ६:००-७:३६रात्रि | वक्र | ४:२४-६:०० | अमृत | ७:३६-९:१२ | महेन्द्र | ८:२४-१०:४८ | अमृत | ३:३६-५:१२ | अमृत |
| ८:२४-१०:०० | अमृत | ९:१२-१०:०० | अमृत | ७:३६-९:१२ | महेन्द्र | ६:००-६:४८रात्रि | शून्य | ९:१२-१०:०० | अमृत | १०:४८-१:१२ | वक्र | ५:१२-६:०० | शून्य |
| १०:००-१०:४८ | शून्य | १०:००-१:१२ | वक्र | ९:१२-१०:०० | अमृत | ६:४८-९:१२ | अमृत | १०:००-१:१२ | वक्र | १:१२-३:३६ | महेन्द्र | ६:००-८:२४रात्रि | वक्र |
| १०:४८-१:१२ | वक्र | १:१२-२:४८ | अमृत | १०:००-१२:२४ | वक्र | ९:१२-१०:४८ | महेन्द्र | १:१२-२:४८ | अमृत | ३:३६-४:२४ | शून्य | ८:२४-१०:४८ | अमृत |
| १:१२-३:३६ | शून्य | २:४८-४:२४ | शून्य | १२:२४-२:०० | अमृत | १०:४८-१२:२४ | वक्र | २:४८-४:२४ | शून्य | ४:२४-६:०० | अमृत | १०:४८-१२:२४ | वक्र |
| ३:३६-४:२४ | महेन्द्र | ४:२४-५:१२ | वक्र | २:००-२:४८ | शून्य | १२:२४-२:०० | शून्य | ४:२४-६:०० | अमृत | | | १२:२४-२:०० | शून्य |
| ४:२४-६:०० | अमृत | ५:१२-६:०० | शून्य | २:४८-३:३६ | वक्र | २:००-६:०० | अमृत | | | | | २:००-३:३६ | अमृत |
| | | | | ३:३६-४:२४ | महेन्द्र | | | | | | | ३:३६-४:२४ | शून्य |
| | | | | ४:२४-६:०० | अमृत | | | | | | | ४:२४-६:०० | अमृत |

परमपूज्य सद्‌गुरुदेव डा. नारायणदत्त श्रीमाली (परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज) द्वारा रचित *'ज्योतिष और काल निर्णय'* पुस्तकमा आधारित ।

**महेन्द्रकाल- सर्वश्रेष्ठ, अमृतकाल- श्रेष्ठ, वक्रकाल- सामान्य, शून्यकाल- निकृष्ट । शुभकालमा राहुकाल पनि मिसिएको छ भने त्यो समय पनि आफैँ अशुभ हुन्छ ।**

सूक्ष्म काल विवेचना गर्नुपर्दा– सर्वप्रथम कुन बार हो र कति बजेको विवेचना गर्नु छ, त्यसअनुसार कुन काल परेको छ (महेन्द्रकाल, अमृतकाल, वक्रकाल वा शून्यकाल) त्यो तालिका हेरेर पत्ता लगाउनु पर्दछ । उदाहरणका लागि २०६५ चैत्र १६ गते आइतबार बिहान ७:५५ बजेको सूक्ष्म विवेचना गरौँ । आइतबार प्रात: ६:४८ देखि १० :०० बजेसम्म अमृतकालको समय छ । हाम्रो समय अमृतकालमा परेको छ । अब हाम्रो समय ७:५५ बाट हाम्रो काल शुरु भएको समय ६:४८ घटाऔँ । बाँकी रह्यो १:०७ अर्थात् १ घण्टा ७ मिनेट । अब घण्टा जति भए पनि त्यसलाई छोडिदिएर मिनेटमा मात्र विचार गर्नुहोस्- ७ मिनेट । त्यसपछि चैत्र महिनाको अमृतकालमा ७ मिनेट कहाँ पर्दछ हेर्नुहोस् । त्यहाँ लेखिएको छ– **६ देखि १० मिनेटसम्म : परीक्षा, चुनाव, अन्तरवार्ता, नयाँ जागिर तथा यात्रा आदिको लागि समय शुभ छ । यस समयका अधिष्ठात्रा 'चन्द्र' हुनुहुन्छ, दही खानु शुभ रहन्छ ।** अब यहाँ लेखिएअनुसार गर्न सक्नुहुनेछ ।

प्रसाद ग्रहण गरेर कार्य प्रारम्भ गर्नु शुभ रहन्छ ।

२१ देखि २५ मिनेटसम्म : यात्राको लागि यो समय शुभ छ । यस समयका देवता 'गणपति' हुनहुन्छ, सख्खरको प्रयोग गरेर कार्य प्रारम्भ गर्नु शुभ मानिएको छ ।

२६ देखि ३० मिनेटसम्म: जुवा खेल्नु, व्यापार प्रारम्भ गर्नु, कुनै पनि घर अथवा पसलको मुहूर्त आदिका लागि यो शुभ समय हो । यसका देवता 'विष्णु' हुनुहुन्छ, सख्खर भक्षण शुभ हुन्छ ।

३१ देखि ३५ मिनेटसम्म : जुनसुकै प्रकारको कार्यको लागि यो समय शुभ छ । यसको देवता 'नृसिंह' हुनुहुन्छ, लड्डुको प्रयोग गरेर कार्य प्रारम्भ गर्नु शुभ हुन्छ ।

३६ देखि ४० मिनेटसम्म : यात्रादिका लागि सर्वाधिक उपयुक्त समय छ । यस समयकी देवी 'सरस्वती' हुनुहुन्छ, मूगीको दाना चपाएर यात्रा प्रारम्भ गर्नु शुभ मानिएको छ ।

४१ देखि ४५ मिनेटसम्म : जुवा, व्यापार, व्यवसायका लागि, यात्रा, यज्ञ, पूजन, अनुष्ठान आदिको लागि यो समय शुभ छ । यस समयका देवता 'शिव' हुनुहुन्छ, चामल खाएर गरेर कार्य प्रारम्भ गर्नु शुभ मानिएको छ ।

४६ देखि ५० मिनेटसम्म : विवाह, कुरा छिन्ने कामका लागि प्रस्थान, अन्तरवार्ता, मुद्दा मामिला आदिको लागि यो समय शुभ छ । यस समयका अधिष्ठात्रा 'हनुमान्' हुनुहुन्छ, सख्खरको भक्षण गरेर कार्य प्रारम्भ गर्नु शुभ हुन्छ ।

५१ देखि ५५ मिनेटसम्म : स्थायी कार्य, व्यापार, उन्नति तथा यात्रादिका लागि यो शुभ समय हो । यस समयकी देवी 'गौरी' हुनुहुन्छ, दूबो खाएर कार्य गर्नु शुभ हुन्छ ।

५६ देखि ६० मिनेटसम्म : यात्रा, व्यापार, उन्नति कार्य एवं समस्त शुभ कार्यहरूका लागि यो समय उपयुक्त छ । यसका प्रधान देव 'विष्णु' हुनुहुन्छ, मीठा पकवान खाएर कार्य गर्नु शुभ मानिएको छ ।

## चैत्र महिनाको वक्र काल

१ देखि ५ मिनेटसम्म : व्यापार आदिका लागि अपेक्षाकृत ठीक छ, प्रारम्भमा विलम्ब र पछि सिद्धि मिल्दछ । यसका प्रधान देव 'गरुड' हुनुहुन्छ, बेसार खाएर कार्य प्रारम्भ गरियो भने शुभ रहन्छ ।

६ देखि १० मिनेटसम्म : यात्राको लागि केही बाधाकारक तर अन्त्यमा ठीक हुन्छ । यसका प्रधान देव 'अग्नि' हुनुहुन्छ, तोरी खाएर गरेर कार्य गरियो भने उत्तम हुन्छ ।

११ देखि १५ मिनेटसम्म : जुवा खेल्नका लागि उपयुक्त समय हो । यसका प्रधान देव 'वरुण' हुनुहुन्छ, दही खाएर यात्रा गर्नुहोस् ।

१६ देखि २० मिनेटसम्म: प्रेम प्रदर्शन, प्रणय आदिका लागि यस समयको छनौट ठीक रहन्छ । यस समयका प्रधान देव 'कामदेव' हुनुहुन्छ । मह खाएर कार्यमा जानुहोस् ।

२१ देखि २५ मिनेटसम्म : जासूसी, भेद ज्ञात गर्ने, सामुन्ने भएको व्यक्तिलाई प्रभावित गर्ने आदिका लागि यो समय ठीक छ । यसका प्रधान देव 'वात' हुनुहुन्छ, चामल खाएर जानुहोस् ।

२६ देखि ३० मिनेटसम्म : मित्रता बढाउन, अधिकार प्राप्त गर्न, स्थानान्तरण आदिका लागि यो समय उपयुक्त छ । यसका प्रधान देव 'सूर्य' हुनुहुन्छ, जीराको प्रयोग गरियो भने विशेष अनुकूल रहन्छ ।

३१ देखि ३५ मिनेटसम्म: व्यापार, व्यवसायका लागि समान्य अनुकूल । यसका प्रधान देव 'चन्द्रमा' हुनुहुन्छ, दही खानु शुभ मानिएको छ ।

३६ देखि ४० मिनेटसम्म : यात्रादिका लागि यो समय अनुकूल छ । 'मरुत' यसका देव हुनुहुन्छ । सख्खर खाएर जानु ठीक रहन्छ ।

४१ देखि ४५ मिनेटसम्म : जुवा, दौड, सिनेमा, व्यापार आदिका लागि यो उपयुक्त समय हो । यसका प्रधान देव 'शुक्राचार्य' हुनुहुन्छ । मीठो पकवान खाएर कार्य प्रारम्भ गर्नु शुभ हुन्छ ।

४६ देखि ५० मिनेटसम्म : व्यापारादि कार्यहरूका लागि यो शुभ समय छ । यसका प्रधान देव 'गुरु' हुनुहुन्छ, बेसनको प्रयोग शुभ मानिएको छ ।

५१ देखि ५५ मिनेटसम्म : यात्रा आदिका लागि विशेष अनुकूल छ । यसका प्रधान देव 'गणपति' हुनुहुन्छ, सख्खरको प्रयोग शुभ मानिएको छ ।

५६ देखि ६० मिनेटसम्म : प्रेम, वाद्य, जुवा आदिको

लागि शुभ छ । यसका प्रधान देव 'पुष्पधन्वा' हुनुहुन्छ, मह खाँदा शुभ हुन्छ ।

## चैत्र महिनाको शून्य काल

१ देखि ५ मिनेटसम्म : प्रत्येक कार्यका लागि अशुभ एवं तनावपूर्ण, तर पनि 'गणपति'लाई स्मरण गरेर र सख्खर खाएर कार्य प्रारम्भ गरिन्छ भने शुभ ।

६ देखि १० मिनेटसम्म : प्रत्येक कार्यका लागि व्यवधानपूर्ण, तर 'गौरी'लाई स्मरण गरेर र दही भक्षण गरेर कार्य प्रारम्भ गर्दा अनुकूलता ।

११ देखि १५ मिनेटसम्म : कार्यको प्रारम्भमा तनावहरू, तर पछिको स्थितिमा सुधार, 'अग्नि'देवको स्मरण र तिलको भक्षण शुभ ।

१६ देखि २० मिनेटसम्म : जुवा खेल्नका लागि शुभ, यस समयका देवता 'काल' हुनुहुन्छ, मह खाएर गइयो भने अनुकूल ।

२१ देखि २५ मिनेटसम्म : बाधाकारक समय, तर मुद्दामामिला आदिका लागि शुभ । 'हनुमान्'लाई स्मरण गरेर, सख्खर, घिउ खाएर गइयो भने अनुकूल ।

२६ देखि ३० मिनेटसम्मः प्रणय प्रसङ्ग, मद्यपान, जुवा, घोडा दौड आदिका लागि अनुकूल । यसका प्रधान देवता 'शुक्राचार्य' हुनुहुन्छ, फलको भक्षण गरेर जानुहोस् ।

३१ देखि ३५ मिनेटसम्म : यात्रादिका लागि विपरीत समय, शुभ कार्यहरूमा वर्जित, प्रधान देवता 'चित्रगुप्त'लाई स्मरण गरेर फूल भक्षण गरेर कार्य प्रारम्भ गरियो भने केही अनुकूलता ।

३६ देखि ४० मिनेटसम्म : जुवा, मद्य, घोडा दौड, सौन्दर्य प्रसाधन सामग्री विक्री, व्यापार आदिको लागि अनुकूल । प्रधान देवता 'विश्वकर्मा'लाई स्मरण गरेर सख्खर, घिउ भक्षण शुभ ।

४१ देखि ४५ मिनेटसम्म : प्रत्येक कार्य अथवा यात्रादिका लागि प्रारम्भमा बाधाकारक तर पछि शुभ । प्रधान देवता 'लक्ष्मी'लाई स्मरण गरेर चामल भक्षण गर्नुहोस् ।

४६ देखि ५० मिनेटसम्म : प्रत्येक कार्यका लागि सामान्य अनुकूल । प्रधान देवता 'मकरध्वज' हुनुहुन्छ । तोरी खानु शुभ ।

५१ देखि ५५ मिनेटसम्म : प्रत्येक कार्यका लागि अशुभ एवं बाधाकारक । प्रधान देवी 'हिडिम्बा' हुनुहुन्छ, घिउको भक्षण शुभ ।

५६ देखि ६० मिनेटसम्म : शुभ, यात्रादिका लागि अनुकूल, प्रधान देवता 'ब्रह्मा' हुनुहुन्छ, दही भक्षण गर्नुहोस् ।

जय गुरुदेव !

## २०६५ चैत्र महिनामा पर्ने चाडपर्व

| | |
|---|---|
| **चैत्र ३ गते** | **श्री शिव गोरक्ष हवन** |
| **चैत्र ४ गते** | **तान्त्रोक्त वटुक भैरव हवन** |
| **चैत्र ५ गते** | **तान्त्रोक्त महालक्ष्मी हवन,** **तान्त्रोक्त विन्ध्यवासिनी हवन-पोखरा** |
| **चैत्र ६ गते** | **तान्त्रोक्त बगलामुखी हवन,** गोरखकाली पूजा **तान्त्रोक्त महर्षि वेदव्यास हवन-दमौली** |
| **चैत्र ८ गते** | **दिव्य गुरु महोत्सव** |
| चैत्र ९ गते | पापमोचनी एकादशी |
| चैत्र ११ गते | प्रदोषव्रत |
| चैत्र १३ गते | घोडेजात्रा |
| चैत्र १४ गते | चैत्र नवरात्रि शुभारम्भ |
| चैत्र २१ गते | चैत्राष्टमी(चैते दशैं), राम नवमी, गोरखकाली पूजा |
| चैत्र २३ गते | कामदा एकादशी |
| चैत्र २५ गते | प्रदोष व्रत, महावीर जयन्ती |
| **चैत्र २६ गते** | **पूजनीय गुरुमाता भगवतीदेवी श्रीमालीज्यूको जन्मोत्सव** |
| चैत्र २७ गते | हनुमान् जयन्ती, बालाजु बाइस धारा मेला |

**प्रत्येक बृहस्पतिबार बिहान १०:०० बजे-गुरू पूजन**
**प्रत्येक दिन साँझ ५:०० बजे-आरती**

# आत्मिक निवेदन

आत्मीय पाठकवर्ग,

'गोरक्ष निखिल वाणी' पत्रिका यहाँहरुलाई कस्तो लागिरहेको छ ? अनेक बाधा, अड्चन एवं समस्याहरुका बावजुद पत्रिकालाई निरन्तरता दिँदै प्रबुद्ध, पाठकहरुको कसीमा आफूलाई घोट्दै शुद्धता एवं स्तरीयतामा क्रमशः वृद्धि गर्दै जाने हाम्रो संकल्प एवं प्रयास रहँदै आएको छ । भौतिकतामा चुर्लुम्म डुबेको आजको समाजमा एउटा आध्यात्मिक पत्रिकालाई नियमितता दिनु र आफ्नो खुट्टामा उभिन सक्ने बनाउनु भनेको निश्चय पनि असम्भवजस्तो लाग्दछ । तर परमपूज्य सद्गुरुदेवहरुको आशीर्वादले यो असम्भवलाई सम्भव बनाउने कार्य तपाईंहरुबाटै भइसकेको छ । पत्रिकालाई युगौं-युगसम्म जीवन्त राखी आउँदो पुस्तालाई हाम्रो आध्यात्मिक धरोहरको रुपमा हस्तान्तरण गर्ने जिम्मेवारी पनि तपाईं, हाम्रै काँधमा आएको छ ।

प्रत्येक व्यक्ति स्वयं आध्यात्मिक पथमा अग्रसर भई आफ्नो परिवार, टोल, छिमेक, समाज, गाउँ, सहर, जिल्ला, अञ्चल हुँदै सम्पूर्ण देश अनि सम्पूर्ण विश्वलाई नै अध्यात्ममय बनाउने महान् अभियानलाई मूर्तरुप दिन पत्रिका सबैभन्दा सशक्त माध्यम बन्न सक्छ । अतः पत्रिका सदस्यता विस्तारको कार्यक्रममा यहाँहरुको सहयोगको अपेक्षा गर्दछौं ।

पत्रिकाको बिक्री मूल्य रू. ३०।- मात्र भएकोले तपाईंले कम्तिमा दसवटा पत्रिका मगाएर आफ्ना नाता-गोता, छरछिमेकमा बाँड्न सक्नुहुन्छ । तपाईंको घर, टोल, छिमेक वा नातागोतामा कहीं पनि पूजा-आजा, हवन, विवाह, व्रतबन्ध, सप्ताह, जन्मदिन, मेला, पर्व, महोत्सव आदि हुँदैछन् भने त्यहाँ पत्रिकाको स्टल राखेर यसको महत्वबारे जानकारी गराउनुका साथै वार्षिक सदस्यताका लागि प्रेरित गर्न सक्नुहुन्छ ।

यसका अलावा टाढा-टाढा रहेका आफ्ना नाता-गोता, मित्रजनहरुलाई हुलाकमार्फत पत्रिका पठाउन सक्नुहुन्छ । यसो गर्दा आत्मिक सम्बन्ध अझ प्रगाढ हुन जान्छ ।

यो पत्रिका यहाँहरुको आफ्नै भएकोले यसलाई फलाउने, फुलाउने र फैलाउने जिम्मा पनि यहाँहरुकै हो । यसैले, सम्पूर्ण पाठकहरुमा हाम्रो आत्मिक निवेदन छ– आफूलगायत कम्तिमा पाँचजना वार्षिक सदस्य बनाउने संकल्प आजकै दिनदेखि गरौं ।

यहाँहरु सबैको सहयोगले पत्रिकाको सदस्य सङ्ख्या निरन्तररुपमा वृद्धि हुँदै जानेछ जसले गर्दा पत्रिकालाई अझ स्तरीय एवं आकर्षक बनाउन मद्दत मिल्नेछ भन्ने कुरामा हामी विश्वस्त छौं ।

वार्षिक सदस्यताको लागि रु. ३५०।- (अक्षरेपी रु. तीन सय पचास मात्र) हामीलाई पठाउनुहोस् । त्यसपछिको बाँकी काम हामी गर्नेछौं ।

अन्तमा, आत्मीय पाठकवर्गहरुमा विनम्र अनुरोध छ कि पत्रिकाको स्वयंले अध्ययन गरौं एवं आफ्नो परिवार तथा इष्टमित्रलाई पनि पढ्न अनुरोध गरौं । यसका अलावा अन्य पाँचजना व्यक्तिलाई पढाउने प्रयास गरौं ।

संसारको सबैभन्दा ठूलो दान ज्ञान दान हो, तपाईंको सानो दानले कसैको जीवनमा नयाँ मोड आउन सक्छ, जीवनमा सदाबहार छाउन सक्दछ । त्यसैले परमपूज्य सद्गुरुदेवहरुको महान् योजनालाई मूर्तरुप दिँदै चरितार्थ गराउन आजदेखि गुरु कार्यमा सहभागी बनौं र यस योजनालाई आ-आफ्नो तरीकाबाट सहयोग गरौं ।

पत्रिकाको बिक्री हाम्रो उद्देश्य होइन, अपितु परमपूज्य सद्गुरुदेवहरुको असीम अनुकम्पाले प्रत्येक जन-जनमा गोरक्ष निखिल ऊर्जाको सञ्चार गरी आध्यात्मिक युगको पुनः निर्माण गर्नु हो ।

अस्तु ।

# काली पूजन

चैत्र नवरात्रिको छुट्टै प्रकारको विशेषता र महत्त्व रहेको पाइन्छ । यस चैत्र नवरात्रि माता कालीको कृपा, आशीर्वाद पाउने विशेष अवसर हो । यस शुभ-अवसरमा माता कालीको पूजन, अर्चनको विशेष महत्त्व छ । त्यसैले यस चैत्र नवरात्रिमा उहाँको पूजन, अर्पण गरेर सिद्धि, शक्तिले सम्पन्न बनौँ ।

प्रात:कालमा स्नानादि नित्यकर्मबाट निवृत्त भएर शुभ-मुहूर्तमा पहिल्यै शुद्ध गरिएको पूजा स्थानमा कालो आसन ओछ्याएर आफ्नो अगाडि प्राण-प्रतिष्ठित काली यन्त्र, गुटीका एवं अन्य पूजन सामग्रीहरू लिएर बसौँ । यन्त्र एवं गुटीकालाई आफ्नो अगाडि स्थापित गरौँ र निम्नानुसार पूजन गरौँ ।

**स्वागत**

फूल लिएर निम्नलिखित मन्त्र पढौँ र माताको यन्त्रमाथि चढाऔँ–

**स्वागतं ते महामाये चण्डिके सर्वमंगले ।**
**पूजा गृहाण विविधां सर्वकल्याणकारिणि ॥**

**आसन**

निम्नलिखित मन्त्र पढेर फूल चढाऔँ–

**ॐ आसनं भास्वरं तुंगं मांगल्यं सर्वमंगले ।**
**भजस्व जगतां मातः प्रसीद जगदीश्वरि ॥**
**ह्रीं श्रीं क्रीं परमेश्वरि स्वाहा ॥**

**पाद्य**

अब निम्नलिखित मन्त्र पढेर जल अर्पण गरौँ–

**ॐ गंगादि सलिलाधारं तीर्थं मन्त्राभिमन्त्रितम् ।**
**दूर यात्रा श्रम हरं पाद्यं तत्प्रति गृह्यताम् ॥**
**ह्रीं श्रीं क्रीं परमेश्वरि स्वाहा ॥**

**अर्घ्य**

निम्नलिखित मन्त्र पढेर देवीलाई अर्घ्य जल अर्पण गरौँ–

**ॐ तिल तण्डुल संयुक्तं कुश पुष्प समन्वितम् ।**
**सुगन्धं फल संयुक्तमर्घ्यं देवि गृहाण मे ॥**
**ह्रीं श्रीं क्रीं परमेश्वरि स्वाहा ॥**

**आचमन**

निम्नलिखित मन्त्र पढेर देवीलाई आचमनीले जल चढाऔँ–

**ॐ स्नानादिकं विधायापि यतः शुद्धिरवाप्यते ।**
**इदमाचमनीयं हि कालिके देवि प्रगृह्यताम् ॥**
**ह्री श्रीं क्रीं परमेश्वरि स्वाहा आचमनीयं निवेदयामि ।**

**स्नान**

सुगन्धित जलले निम्नलिखित मन्त्र पढेर देवीलाई स्नान गराऔँ–

**ॐ खमापः पृथिवी चैव ज्योतिषं वायुरेव च ।**
**लोक संस्मृति मात्रेण वारिणा स्नापयाम्यहम् ॥**
**ह्रीं श्रीं क्रीं परमेश्वरि स्वाहा स्नानं निवेदयामि ॥**

**मधुपर्क**

मधुपर्क काँसको पात्रमा निर्माण गरिन्छ । यसका लागि शुद्ध घिउ, शुद्ध मह एवं शुद्ध दही लिनु आवश्यक हुन्छ । यी सामग्रीहरूलाई काँसको पात्रमा मिसाएर निम्नलिखित मन्त्र पढेर देवीलाई अर्पण गरौँ–

**ॐ मधुपर्कं महादेवि ब्रह्माद्यैः कल्पितं तव ।**
**मया निवेदितं भक्त्या गृहाण गिरि पुत्रिके ॥**
**ह्रीं श्रीं क्रीं परमेश्वरि स्वाहा ॥**

**पुनराचमन**

पुनः देवीलाई निम्नलिखित मन्त्रबाट आचमन गराऔँ–

**ॐ स्नानादिकं पुरः कृत्वा पुनः शुद्धिरवाप्यते ।**
**पुनराचमनीयं च कालिके देवि प्रगृह्यताम् ॥**
**ह्रीं श्रीं क्रीं परमेश्वरि स्वाहा ॥**

**चन्दन**

निम्नलिखित मन्त्र पढेर देवीलाई श्वेत चन्दन अर्पण गरौँ–

**ॐ मलयाचल सम्भूतं नाना गंध समन्वितम् ।**
**शीतलं बहुलामोदं चन्दनम् गृह्यतामिदम् ॥**
**ह्रीं श्रीं क्रीं परमेश्वरि स्वाहा ॥**

**सिन्दूर**

निम्नलिखित मन्त्र पढेर देवीलाई सिन्दूर अर्पण गरौँ–

**ॐ सिन्दूरं सर्वसाध्वीनां भूषणाय विनिर्मितम् ।**
**गृहाण वर दे देवि भूषणानि प्रयच्छ मे ॥**
**ह्रीं श्रीं क्रीं परमेश्वरि स्वाहा सिन्दूरम् समर्पयामि ॥**

**कुंकुम**

निम्नलिखित मन्त्र पढेर देवीलाई कुंकुम चढाऔँ–

**ॐ जपापुष्पप्रभं रम्यं नारी भाल विभूषणम् ।**
**भास्वरं कुंकुमं रक्तं देवि दत्तं प्रगृह्य मे ॥**
**ह्रीं श्रीं क्रीं परमेश्वरि स्वाहा कुंकुमं समर्पयामि ॥**

**अक्षता**

निम्नलिखित मन्त्र पढौँ र देवीलाई अक्षता समर्पित गरौँ–

**ॐ अक्षतं धान्यजं देवि ब्रह्मणा निर्मितं पुरा ।**
**प्राणदं सर्वभूतानां गृहाण वर दे शुभे ॥**
**ह्रीं श्रीं क्रीं परमेश्वरि स्वाहा अक्षतान् समर्पयामि ॥**

**पुष्प**

निम्नलिखित मन्त्र पढेर देवीलाई फूल अर्पण गरौँ–

**ॐ चलत्परिमलामोदमत्तालि गण संकुलम् ।**
**आनन्दनन्दनोद्भूतं कालिकायै कुसुमं नमः ॥**
**ह्रीं श्रीं क्रीं परमेश्वरि स्वाहा पुष्पम् समर्पयामि ॥**

**बिल्वपत्र**

निम्नलिखित मन्त्र पढेर देवीलाई बेलपत्र अर्पण गरौँ–

**ॐ अमृतोद्भवं श्रीवृक्षं शंकरस्य सदाप्रियम् ।**
**पवित्रं ते प्रयच्छामि सर्व कार्यार्थ सिद्धये ॥**
**ह्रीं श्रीं क्रीं परमेश्वरि स्वाहा बिल्वपत्रम् समर्पयामि ॥**

**माला**

सुगन्धित फूलमाला बनाएर निम्नलिखित मन्त्र वाचन गरेर देवीलाई अर्पण गरौँ–

**ॐ नाना पुष्प विचित्राढ्यां पुष्प मालां सुशोभनाम् ।**
**प्रयच्छामि सदा भद्रे गृहाण परमेश्वरि ॥**
**ह्रीं श्रीं क्रीं परमेश्वरि माल्यम् समर्पयामि ॥**

**वस्त्र**

नयाँ दुई वस्त्र लिएर एउटा वस्त्र निम्नलिखित मन्त्र पढेर देवीलाई अर्पण गरौँ–

**ॐ तन्तु सन्तानसंयुक्तं कला कौशल कल्पितं ।**
**सर्वांगाभरण श्रेष्ठं वसनं परिधीयताम् ॥**
**ह्रीं श्रीं क्रीं परमेश्वरि प्रथम वस्त्रं समर्पयामि ।**

द्वितीय वस्त्र

तलको मन्त्र उच्चारण गर्दै मातालाई पुनः अर्को वस्त्र अर्पण गरौँ ।

**ॐ यामाश्रित्य महादेवो जगत्संहारकः सदा ।**
**तस्यै ते परमेशान्यै कल्पयाम्युत्तरीयकम् ॥**
**ह्रीं श्रीं क्रीं परमेश्वरि द्वितीय वस्त्रं समर्पयामि ॥**

**धूप**

निम्नलिखित मन्त्र पढेर देवीलाई गोकुल धूप वा सुगन्धित धूप समर्पित गरौँ–

**ॐ गुग्गुलं घृत संयुक्तं नानाभक्ष्यैश्च संयुतम् ।**
**दशांग गृह्यतां धूपं कालिके देवि नमोऽस्तुते ॥**
**ह्रीं श्रीं क्रीं परमेश्वरि धूपं समर्पयामि ॥**

**दीप**

दीयोमा शुद्ध घिउ भरेर दीपलाई प्रज्ज्वलित गरौँ र निम्नलिखित मन्त्र पढौँ–

**ॐ मार्तण्ड मण्डलान्तस्थ चन्द्रबिम्बाग्नि तेजसाम् ।**
**निधानं देवि कालिके दीपोऽयं निर्मितस्तव भक्तितः ॥**
**ह्रीं श्रीं क्रीं परमेश्वरि दीपं समर्पयामि ॥**

दीयोलाई देवीको नेत्रसमक्ष दशपटक घुमाएर पुनः देवीसमक्ष स्थापित गरौँ ।

**सुगन्धित द्रव्य**

निम्नलिखित मन्त्र पढेर सुगन्धित द्रव्य, फूल आदि देवीलाई समर्पित गरौँ–

**ॐ परमानन्द सौरभ्यं परिपूर्ण दिगम्बरम् ।**
**गृहाण सौरभं दिव्यं कृपाया जगदम्बिके ॥**
**ह्रीं श्रीं क्रीं परमेश्वरि सुगन्धितं द्रव्यं समर्पयामि ॥**

**नानाविध नैवेद्य**

निम्नलिखित मन्त्र पढेर देवीलाई नैवेद्य समर्पित गरौँ–

**ॐ दिव्यान्नरस संयुक्तं नाभक्ष्यैस्तु संयुतम् ।**
**चौष्यपेयसमायुक्तमन्नं देवि गृहाण मे ॥**
**ह्रीं श्रीं क्रीं परमेश्वरि नानाविध नैवेद्यं समर्पयामि ॥**

### आचमन

निम्नलिखित मन्त्र पढेर जल चढाऔँ–
**ॐ आमोदवस्तु सुरभीकृतमेतदनुत्तमम् ।**
**गृहाणाचमनीयं त्वं मया भक्तया निवेदितम् ॥**
**ह्रीं श्रीं क्रीं परमेश्वरि आचमनीयं समर्पयामि ॥**

### ताम्बूल

निम्नलिखित मन्त्र पढेर देवीलाई पान, मसला आदि अर्पण गरौँ–
**ॐ पूंगीफलं महद्दिव्यं नागवल्लीदलैर्युतम् ।**
**कर्पूरैलासमायुक्तं ताम्बूलं प्रतिगृह्यताम् ॥**
**ह्रीं श्रीं क्रीं परमेश्वरि ताम्बूलं समर्पयामि ॥**

### कज्जल

निम्नलिखित मन्त्रबाट देवीलाई गाजल अर्पण गरौँ–
**ॐ स्निग्धमुष्णं हृद्यतमं दृशां शोभाकरं तव ।**
**गृहीत्वा कज्जलं सद्यो नेत्राण्यंजय कालिके ।**
**ह्रीं श्रीं क्रीं परमेश्वरि कज्जलम् समर्पयामि ।**

### दक्षिणा

निम्नलिखित मन्त्र पढेर देवीलाई दक्षिणा अर्पण गरौँ–
**ॐ कांचनं रजतोपेतं नानारत्नसमन्वितम् ।**
**दक्षिणार्थ च देवेशि गृहाण त्वं नमोऽस्तुते ॥**
**ह्रीं श्रीं क्रीं परमेश्वरि दक्षिणाम् समर्पयामि ।**

### पुष्पाञ्जलि

आफ्नो दुवै हातमा थरिथरिका सुगन्धित फूलहरू लिएर निम्नलिखित मन्त्र पढौँ र देवीलाई यो पुष्पाञ्जलि अर्पण गरौँ–
**ॐ काली काली महाकाली कालिके पाप नाशिनी ॥**
**काली कराली निष्क्रांते कालिके तवन्नमोऽस्तुते ॥**
**ॐ उत्तिष्ठ देवि चामुण्डे शुभां पूजां प्रगृह्य मे ।**
**कुरुष्व मम कल्याणमष्टाभि शक्तिभि सह ॥**
**भूत प्रेत पिशाचेभ्यो रक्षोभ्यश्च महेश्वरि ।**
**देवेभ्यो मानुषेभ्योश्च भयेभ्यो रक्ष मां सदा ॥**
**सर्वदेवमयीं देवीं सर्व रोगभयापहाम् ।**
**ब्रह्मेश विष्णु नमितां प्रणमामि सदा उमाम् ।**
**आयुर्ददातु मे काली पुत्रानपि सदा शिवा ॥**
**अर्थ कामो महामाया विभवं सर्व मङ्गला ॥**
**ह्रीं श्रीं क्रीं परमेश्वरि पुष्पांजलिम् समर्पयामि ॥**

### नीराजन

आफ्नो श्रद्धाअनुसार दीयोमा ज्योति प्रज्ज्वलित गरेर निम्नलिखित मन्त्र पढेर बायाँ हातबाट घण्टा बजाउँदै दायाँ हातबाट देवीको आरती गरौँ–
**ॐ कर्पूरवर्ति संयुक्तं वह्निना दीपितंच यत् ।**
**नीरांजनं च देवेशि गृह्यतां जगदम्बिके ॥**
**ह्रीं श्रीं क्रीं परमेश्वरि नीरांजनं स्वीकार करोतु मे देवि ॥**

### क्षमा याचना

हात जोडेर निम्नलिखित मंत्र पढ्दै देवीसँग क्षमा याचना गरौँ–
**ॐ प्रार्थयामि महामाये यत्किंचित् स्खलितं मम् ।**
**क्षम्यतां तज्जगन्मातः कालिके देवि नमोऽस्तुते ॥**
**ॐ विधिहीनं क्रियाहीनं भक्तिहीनं यदर्चितम् ॥**
**पूर्णम्भवतु तत्सर्वं त्वत्प्रसादान्महेश्वरि ॥**
**शक्नुवन्तिं न ते पूजां कर्तुं ब्रह्मादयः सुराः ॥**
**अहं किं वा करिष्यामि मृत्युर्धर्मा नरोऽल्पधीः ॥**
**न जानेऽहं स्वरूपं ते न शरीरं न वा गुणान् ।**
**एकामेव ही जानामि भक्तिं त्वच्चरणाब्जयोः ॥**

यसप्रकार आद्या भगवती माता कालिका देवीको षोडशोपचार पूजन सम्पन्न गरी स्तोत्र कवचादिको पाठ गर्न सकिन्छ। तत्पश्चात् माता कालीको आरती गरी प्रसाद ग्रहण गरौँ ।

जय गुरुदेव !

## काली आरती

**अम्बे तू है जगदम्बे काली जय दुर्गे खप्पर वाली ।**
**तेरे ही गुण गावे भारती,**
**ओ मैया हम सब उतारें तेरी आरती ॥**
**तेरे भक्तजनों पर माता भीड पडी है भारी ।**
**दानव दल पर टूट पडो मां करके सिंह सवारी ॥**
**सौ सौ सिंहों से है बलशाली है दश भुजाओं वाली ।**
**दुःखियों के दुःखडे निवारती ।**
**ओ मैया...**
**मां बेटे का है इस जग में बडा ही निर्मल नाता ।**
**पूत कपूत सुने हैं पर ना माता सुनी कुमाता ॥**
**सब पे करुणा दरसाने वाली अमृत बरसाने वाली ।**
**दुःखियों के दुःखडे निवारती ।**
**ओ मैया...**
**नहीं मांगते धन और दौलत न चांदी न सोना ।**
**हम तो मांगे मां तेरे मन में एक छोटा सा कोना ॥**
**सबकी बिगडी बनाने वाली लाज बचाने वाली ।**
**सतियों के सत को संवारती ।**
**ओ मैया...**

# श्रीहनुमत्प्रोक्त मन्त्रराजात्मक रामस्तव

तिरश्चामपि चारातिसमवायं समेयुषाम् । यतः सुग्रीवमुख्यानां यस्तम**मुग्रं** नमाम्यहम् ।।
सकृदेव प्रपन्नाय विशिष्टामैरयच्छ्रियम् । विभीषणायाब्धितटे यस्तं **वीरं** नमाम्यहम् ।।
यो महान् पूजितो व्यापी महान् वै करुणामृतम् । स्नुतं येन जटायोश्च **महाविष्णुं** नमाम्यहम् ।।
तेजसाप्यायिता यस्य ज्वलन्ति ज्वलनादयः । प्रकाशते स्वतन्त्रो यस्तं **ज्वलन्तं** नमाम्यहम् ।।
सर्वतोमुखता येन लीलया दर्शिता रणे । रक्षसां खरमुख्यानाम् तं वन्दे **सर्वतोमुखम्** ।।
नृभावं यः प्रपन्नानां हिनस्ति च तथा नृषु । सिंहः सत्त्वेष्विवोत्कृष्टस्तं **नृसिंहं** नमाम्यहम् ।।
यस्माद्बिभ्यति वातार्कज्वलनेन्द्राः समृत्यवः । भियं तनोति पापानां **भीषणं** तं नमाम्यहम् ।।
परस्य योग्यतापेक्षारहितो नित्यमङ्गलम् । ददात्येव निजौदार्याद् यस्तं **भद्रं** नमाम्यहम् ।।
यो मृत्युं निजदासानां नाशयत्यखिलेष्टदः । तत्रोदाहृतये व्याधो **मृत्युमृत्युं** नमाम्यहम् ।।
यत्पादपद्मप्रणतो भवत्युत्तमपूरुषः । तमजं सर्वदेवानां नमनीयं **नमाम्यहम्** ।।
अहंभावं समुत्सृज्य दास्येनैव रघूत्तमम् । भजेऽहं प्रत्यहं रामं ससीतं सहलक्ष्मणम् ।।
नित्यं श्रीरामभक्तस्य किंकरा यमकिंकराः । शिवमय्यो दिशस्तस्य सिद्धयस्तस्य दासिकाः ।।

इमं हनूमता प्रोक्तं मन्त्रराजात्मकं स्तवम् । पठत्यनुदिनं यस्तु स रामे भक्तिमान् भवेत् ।।

आफ्नो मुख्य शत्रु रावणको विनाशको लागि कपिराज सुग्रीवादि तीर्यक् योनिहरुमा उत्पन्न भएका वानर भालुहरुको सेना संगठित गरेर (र सैन्य-शिक्षाद्वारा उनीहरुलाई सुप्रबुद्ध गरेर) लंकामाथि विजय प्राप्त गर्नुभयो, यस्ता अति उग्र भगवान् रामलाई म नमस्कार गर्दछु । समुद्र तटमा आएका विभीषणलाई केवल एकपटक 'म हजूरको शरणमा छु' भन्दैमा जसले लंका आदि राज्यसहित अपार वैभव प्रदान गर्नुभयो, यस्ता महावीर श्री रामलाई म प्रणाम गर्दछु । जो सर्वव्यापक हुनुहुन्छ, सबैभन्दा महान् हुनुहुन्छ र देवता, ऋषिमुनिहरुबाट पनि पूजित हुनुहुन्छ तथा महान् कृपा सुधाको मूर्तिमान् स्वरुप हुनुहुन्छ र त्यस कृपासुधाबाट जटायुलाई पनि जसले संसिक्त गरेर मुक्त गरिदिनुभयो, यस्ता महाविष्णुस्वरुप भगवान् रामलाई म प्रणाम गर्दछु । अग्नि, चन्द्रमा, सूर्य आदि तेजस्वी ज्योतिपुञ्ज जसको तेजबाट नै प्रकाशित एवं प्रज्ज्वलित हुन्छन् र जो स्वयं आफ्नो तेजबाट प्रकाशित हुनुहुन्छ, यस्ता प्रज्ज्वलित तेजोमय भगवान् रामलाई म प्रणाम गर्दछु । रणस्थलमा खर-दूषण, त्रिशिरा आदि राक्षसहरुसँग युद्ध गरेको समयमा जसले आफ्नो लीलाले आफ्नो मुखमण्डल सबैतिर देखाउनु भयो (र सबैलाई नाश गरिदिनुभयो), यस्ता सर्वतोमुख भगवान् रामको म वन्दना गर्दछु । शरणमा आउनासाथ जसले मनुष्यहरुको सामान्य मोहमय मनुष्यभावलाई नष्ट गरेर उनीहरुलाई लोकोत्तर ज्ञान एवं विशिष्ट दिव्य शक्तिहरुबाट सम्पन्न बनाइदिनु हुन्छ र जो सम्पूर्ण विश्वमा सिंहको समान बलवान् हुनुहुन्छ, यस्ता नरसिंह भगवान् रामलाई म नमन गर्दछु । जससँग अग्नि, वायु, सूर्य, इन्द्र, यम आदि सबै भयभीत रहन्छन् र पाप त जसको भयले सधैं नै टाढा भाग्दछ, यस्ता भीषण रामलाई म नमस्कार गर्दछु । जसले आफ्ना भक्तहरुको कुनै योग्यता आदिको अपेक्षा नगरीकन नै आफ्नो उदार स्वभावको कारण सधैं सबैकुरा दिदैं नै रहनुहुन्छ र जो नित्य मङ्गलस्वरुप हुनुहुन्छ, यस्ता परम भद्र-स्वरुप सौजन्यमूर्ति भगवान् रामलाई म प्रणाम गर्दछु । जसले आफ्ना भक्तहरुको मृत्युलाई समूलोच्छेदन गरेर उनीहरुको सारा अभिलाषा पूर्ण गरिदिनुहुन्छ, यस सम्बन्धमा महर्षि वाल्मीकि जो पहिले कुनै समयमा व्याधाको काम गर्दथे, परम प्रमाण छन्, यस्ता मृत्युका पनि मृत्यु भक्तवत्सल भगवान् रामलाई म प्रणाम गर्दछु । जसका चरणकमलहरुलाई प्रणाम गर्नासाथ अधम पुरुष पनि उत्तम पुरुष बन्न पुग्दछ, यस्ता जन्मादि षड्-विकारहरुबाट मुक्त, सबै देवताहरुद्वारा वन्दित भगवान् रामको म वन्दना गर्दछु । म (हनुमान्) ब्रह्मैकात्म्य-भावलाई त्यागेर दास्यभाव अर्थात् सेव्य-सेवकको भावनाबाट अहर्निश लक्ष्मणसहित श्रीसीतारामको उपासना गर्दछु । भगवान् श्रीरामका भक्तका लागि यमदूत पनि सदाका लागि किंकर (सेवक-दास) बन्न पुग्छन्, उनीहरुका लागि दशै दिशाहरु मङ्गलमय हुन जान्छन् र सबै सिद्धहरु उनीहरुका चरणमै लम्पसार पर्दछन् । हनुमत्प्रोक्त यस मन्त्रराजात्मक स्तोत्रको पाठ जसले गर्दछन्, उनीहरु भगवान् श्रीरामका भक्त हुन जान्छन् । जय गुरुदेव ! (कल्याण श्रीरामभक्ति अङ्क वर्ष ६८, पेज नं.८)

**"तिमीले पत्नीलाई पत्नीको रूप**
**सामान्य नभएर लीलाविहारिणी**
**सुखद कल्पना, एउटा अनुकूल अ**

**आज नहोला, तर आगामी समय**
**धेरै ठूलो छ । तिम्रो त्यागको प्र**

पूजनीय गुरूमाता श्री भगवती देवी श्रीमालीज्यूको जन्म दिवसको पावन अवसरमा हार्दिक मंगलमय शुभकामना अर्पण गर्दै माताजीको चरणकमलमा कोटि–कोटि प्रणाम अर्पण गर्दछौं ।

शिवसँग शक्ति अभिन्न भए जस्तै माताजी पनि परमपूज्य सद्गुरुदेवबाट अभिन्न हुनुहुन्छ र यस कुराको पुष्टि स्वयं सद्गुरुदेवले नै गर्नुभएको छ, यसो भन्दै- 'माता र ममा कुनै भेद छैन ।' परमपूज्य सद्गुरुदेवले सदा नै माताजीको उच्च सम्मान गर्नुभएको छ र उहाँको त्याग र तपस्याको सराहना गर्नुभएको छ । परमपूज्य सद्गुरुदेवले आफ्नो अवतरणकालमा हजारौं संघ संस्थाहरूले मिलेर गर्न नसक्ने जुन अद्वितीय र अलौकिक कार्य गर्नुभएको छ यसको पछाडि वास्तवमा नै तपोनिष्ठ, सहनशील र त्यागकी प्रतिमूर्ति माताजीको नै हात छ ।

लुप्तप्राय: स्थितिमा पुगेका सम्पूर्ण प्राचीन गूढ विद्याहरूको खोज, अनुसन्धान गरी तिनका उपयोगिता र उपादेयतालाई जनकल्याणका लागि उजागर गर्ने महान् उद्देश्यले जब

# चरणमा कोटि–कोटि नमन

**मा लिएर पनि आद्याशक्तिको प्रकाशको एउटा कणको रूपमा अनुभव गर्न सक्छौ, तिम्रो गृहस्थी जीवन को एउटा कौतुक हो जुन समाजको लागि एउटा गृहस्थी जीवनको पर्याय हो भने मेरो लागि त्यो एउटा आश्चर्य अनि माता जगदम्बाको एउटा निर्लिप्त प्रकाशविन्दु हो ।"**

**–दादा गुरुदेव स्वामी सच्चिदानन्द महाराज**
**(आफ्नो प्रिय शिष्य डा. नारायणदत्त श्रीमालीलाई लेख्नुभएको पत्रबाट उद्धृत)**

**ले यस कुरालाई स्वीकार गर्नेछ कि मेरो निर्माणको पछाडि तिम्रो हात छ । तिम्रो त्याग मेरो त्यागभन्दा काशमा नै म अघि बढिरहेको छु । मेरो पछाडि तिम्रो धेरै ठूलो संवल छ, तिम्रो प्रेरणा र शक्ति छ ।**

**– परमपूज्य सद्गुरुदेव डा. नारायणदत्त श्रीमाली**
**(संन्यस्त जीवनमा रहनुहुँदा आफ्नी धर्मपत्नीलाई लेख्नुभएको पत्रबाट उद्धृत)**

गुरुदेवले जंगल र हिमालयको यात्राको निर्णय गर्नुभयो, उहाँलाई यो कुरा आफ्नो परिवारको सामु राख्न कठीन भइरहेको थियो । नवयौवना माताजी र आफ्नो परिवारलाई छोडेर जंगलतर्फ लाग्नु सामान्य कुरा पनि त थिएन । तर जब माताजीलाई यस कुराको ज्ञान भयो, उहाँले यसको लागि पूर्ण स्वीकृति मात्र दिनुभएन, यस यात्राका लागि प्रेरणा हौसला समेत आफ्ना स्वामीलाई दिनुभयो । त्यस समय उहाँले भन्नुभएको थियो, 'जीवन बिताउनु आफैमा कुनै विशिष्टता होइन, विशिष्टता त यस कुरामा हुन्छ कि जीवन यसरी बितोस् कि त्यो इतिहास बनोस्, जीवनमा केही यस्ता कार्य हुन् जसबाट मानव जातिको सही अर्थमा कल्याण होस्, मृत्यु यस्तो होस् कि लाखौं, करोडौं आखाँहरू छचल्किउन् ।'

यो कुनै सामान्य स्त्रीले गर्नसक्ने कार्य नै होइन । जुन समय युवा हृदय चन्द्रमा सँग कुरा गर्छ, चन्द्रमा नै आफ्नो प्रियलाई भेट दिने योजना बनाउँदछ, प्रत्येक पल आफ्नो प्रियको साथ बिताउन चाहन्छ र जुन समय नारी हृदय आफ्नो पतिदेवको सहचर्यको कामना गर्दछ, त्यस समयमा आफ्ना पतिलाई एउटा अन्यौल र अन्तविहीन यात्रामा मानव हितको लागि पठाउँदै पतिवियोगको विषपान गर्नु निसन्देह नै एउटा असामान्य कार्य हो, एउटा अतुलनीय त्याग हो । सम्पूर्ण अध्यात्म क्षेत्र नै माताजीको यस त्यागको ऋणी छ किनकि यस त्यागको परिणमस्वरूप नै आज पुन: एकपल्ट यस धरामा सम्पूर्ण आध्यात्मिक विधाहरू लहराउने तरखरमा छन् ।

माताजीले आफ्नो जीवनमा अत्यन्त कष्ट र सङ्घर्षको सामना गर्नुभएको छ । दुर्गम ग्रामीण इलाकाका महिलाहरूले जुन कष्ट र यातना भोग्नुपर्दछ त्यो भन्दा पनि धेरै यातना माताजीले भोग्नुभएको छ । एकपल पनि आराम नगरीकन दिनभर खटिरहँदा पनि उहाँमाथि उपेक्षा, गाली र आलोचना बर्सिरहन्थ्यो । त्यस्तो कठीन समयमा पतिको पनि सामीप्यता गुमाउनु उहाँको लागि कति दु:खद र कष्टप्रद कुरा थियो त्यो हाम्रो कल्पनाभन्दा बाहिरको कुरा हो ।

आफ्ना दु:ख वेदनाहरूलाई माताजीले कहिल्यै अरूलाई देखाउनु भएन, त्यसैले सधैं मुस्कुराइरहने उहाँको मुहारले कति वेदनाहरूलाई झेलेको छ भन्ने कुरा सधैं नै लुप्त रह्यो । उहाँको यस महानता र त्यागको परमपूज्य सद्गुरुदेवले सदा नै कदर गर्नुभएको छ ।

आफ्नो जंगलको यात्राको समयमा उहाँले माताजीलाई पत्रमा यसरी लेख्नुभएको छ- 'आज नहोला, तर आगामी समयले यस कुरालाई स्वीकार गर्नेछ कि मेरो निर्माणको पछाडि तिम्रो हात छ । तिम्रो त्याग मेरो त्यागभन्दा धेरै ठूलो छ । तिम्रो त्यागको प्रकाशमा नै म अघि बढिरहेको छु । मेरो पछाडि तिम्रो धेरै ठूलो संवल छ, तिम्रो प्रेरणा र शक्ति छ ।'

विश्व ब्रह्माण्डका अधिपति परमपूज्य सद्गुरुदेवको प्रेरणा र शक्ति माताजी हुनुहुन्छ भने उहाँ निसन्देह नै साधारण नारी हुनुहुन्न । परमपूज्य सद्गुरुदेव परब्रह्म हुनुहुन्छ, ब्रह्माण्डको परम तत्त्व हुनुहुन्छ भने उहाँलाई पति रूपमा वरण गर्ने नारी पनि निश्चय नै त्यही कोटिकी हुनुहुन्छ । तसर्थ माताजी शक्तिस्वरूपा हुनुहुन्छ, जगत्जननी हुनुहुन्छ र उहाँको यस स्वरूपको दर्शन पनि साधनाको माध्यमद्वारा धेरै शिष्यहरूले पाएका छन् । तर यी सबै सत्यहरूलाई लुकाएर माताजी एक साधारण नारी बनिदिनुहुन्छ र उहाँको मुहारमा सधैं नै एउटा अन्जानता झल्किएको हुन्छ । लीलाविहारिणीको लीला साँच्चै नै विचित्रको छ ।

माताजीको जन्मदिन अप्रिल ८ तारीख हाम्रो समीप आइरहेको छ । यो दिवस वास्तवमा नै सम्पूर्ण शिष्यहरूको एउटा दिव्य पर्व हो । यस दिवसले नै माताजीको प्राप्ति गराएको छ र माताजीको त्यागको परिणामस्वरूप आज यो सबै भइरहेछ । माताजीले आफ्नो प्रत्येक दिनको शुरुवात शिष्यहरूको मंगल कामना गर्दै, उनीहरूलाई आशीर्वाद प्रदान गर्दै गर्नुहुन्छ । यस्ती परम ममतामयी माताजीलाई पाएर सम्पूर्ण शिष्य समूह कृतार्थ बनेको छ ।

परम पूजनीय, वन्दनीय माताजीको जन्म दिवसको सुअवसरमा सिद्धाश्रम शक्ति केन्द्र माताजीसँग यो प्रण गर्दछ कि जतिसुकै वाधा-विरोध, आँधी-तुफान आए पनि संस्था परमपूज्य सद्गुरुदेवको चिन्तनलाई विश्वभरि फैलाउने छ..... र विश्वभर छर्नेछ त्यो सुगन्ध जुन माताजीको त्यागबाट उत्पन्न भएको थियो ।

जय गुरुदेव !

*परमपूज्य सद्‌गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथका लीलाहरूको वर्णन गरी तयार पारिएको श्री गोरख महापुराणलाई शृङ्खलाबद्धरूपमा प्रकाशित गर्दै लगिएको छ । यसबाट परमपूज्य सद्‌गुरुदेवको बारेमा जान्न, बुझ्न खोज्ने सम्पूर्ण पाठकहरू लाभान्वित हुनुहुनेछ भन्नेमा हामी विश्वस्त छौँ । यस महापुराणलाई संकलन एवं अनुवाद गरी प्रस्तुत गरिएको हो । यससम्बन्धी सम्पूर्ण कुराहरूको जिम्मेवारी संकलक एवं अनुवादक (विष्णु खनाल,गोर्खा) स्वयंको नै हुनेछ ।*

# श्री गोरख महापुराण

## उनन्साठीऔं भाग

बाबु पद्मनाथ मैले भिन्न-भिन्न तरीकाबाट तिमीलाई काम सिद्धिको रहस्य बुझाएको छु । प्रतिच्यमा यसको कस्तो प्रचार थियो अनि नाथ सम्प्रदायका योगीहरूमा यो काम साधन प्रक्रिया कस्तो थियो, त्यसको पनि विवरण ध्यानपूर्वक सुन । तर प्रक्रियाको ज्ञान हुनुभन्दा अगाडि देहको ज्ञान आवश्यक छ । यसको लागि नरदेहको महत्त्व देखाउनको लागि संश्लिष्ट पदार्थ-समूहको विवरण दिन पनि जरुरी छ । यी पदार्थहरूको सम्यक् ज्ञानबिना देह-सम्पादक कौलिक योगक्रियालाई प्रारम्भ गर्न सम्भव छैन । ती पदार्थ के हुन् ? यसको जानकारी काम साधनको लागि परम आवश्यक छ । नेत्रागममा महेश्वरले यस विषयमा पदार्थ समूहको उल्लेख गर्नु भएको छ । ती हुन्– ऋतु (६) चक्र स्वराधार्य (१६) त्रिलक्ष्य (३) व्योम पंचकं (५) ग्रन्थि द्वादश (१२) संयुक्त शक्ति त्रय (३) समन्वितम् ॥ धाम त्रय पर्याकांतं (३) नाडी त्रय समन्वितम् (३) ज्ञातवा शरीयं सुश्रोणिद शनाडिपयोवृतम् (१०) द्वासप्तति सहस्रैस्तु (७२०००) सधिकोटी त्रयेण च (३,५०,०००००) नाडि वृन्दैः समाक्रान्त मलिन व्याधिभिधृतं । सूक्ष्म ध्यानामृतेमैव परेदैवेदितेनतु । प्राप्यायं कुरुते योगी आत्मनाद परस्य च दिव्य देहः स भवति सर्व व्याधि विवर्जित ॥

१. **चक्र**– (क) जन्मस्थानस्य नाडी चक्र– त्यसलाई आश्रय गरेर विशाल नाडी समूह जालजस्तै फैलिएको छ । (ख) मायाचक्र– नाभि देशमा अवस्थित छ, जहाँबाट माया तमाम व्याप्त छ । (ग) हृदयमा योग चक्र– यो योग प्रसारक आश्रय स्थान हो । (घ) तालु देशमा भेदन चक्र (ङ) दीप्ति चक्र विन्दु-स्थान-भ्रूमध्यमा । (च) शान्त चक्र नादस्थानमा अवस्थित ।

२. **षोडश आधार**– जीवको आधार हुनको फलस्वरूप यो आधार समूह आधार पद वाच्य छ । गोडाको बूढी औंलाबाट द्वादशान्त कमलसम्म यसको विस्तार छ । अंगुष्ठ, गुल्फ, जानु, भेद्र, वायु, कन्द नाडी, जठर हृत् कमल, कर्म नाडी, कष्ठाधार, तालुदेश, भ्रूमध्य, ललाट, ब्रह्मरन्ध्र

र द्वादशान्त । यी सबै आधार नाम प्रचलित छन् ।

३. **लक्ष्य–** (क) अन्तर्लक्ष्य- तडित प्रभाजस्तो अत्यन्त सूक्ष्म कुण्डलिनीस्थित आकाशको दर्शन अथवा शिरको माथि द्वादशांगुलसम्म ज्योतिको दर्शन । यो भित्र र बाह्य इन्द्रिय अगोचर, यस विषयमा पनि मतभेद छ । योगीहरूको अन्तर्लक्ष्य छ । सहस्रारमा जल ज्योतिको दर्शन, वैष्णवहरूको मतबाट बुद्धिको गुहामा सर्वाङ्ग सुन्दर पुरुषरूपको यो दर्शन, शैव मतमा शीर्षस्थ मण्डलमा उमा-महेश्वरको दर्शन, दहर उपासकहरूको अंगुष्ठ मात्र पुरुषरूपको यो दर्शन हो । (ख) मध्य लक्ष्य- नाना विचित्र वर्ष सूर्य, चन्द्र र अग्निको शिखा समान वा त्यसबाट विहित अन्तरिक्षको समान । (ग) बहिर्लक्ष्य- आफ्नो नाकको सम्मुख भागमा अभ्यासको फलस्वरूप केही टाढासम्म व्योम ।

४. **पंच व्योम–** यस व्योम समूहलाई जन्मस्थान, नाभि, हृदय, विन्दु र नादमा भावना गर्नुपर्छ । यी मध्येबाट प्रथम व्योम अनन्त विश्वको आश्रय अनन्त शून्यरूप छ । सूप्तिको आवेश कारक भएको नाताले यो शून्य हेय छ । पंच आकाशको नाम भिन्नभिन्न स्थानहरूमा भिन्नभिन्न प्रकारका छन् । जस्तै- गुणरहित आकाश, प्रकाश, महाकाश, तत्त्वाकाश, सूर्याकाश ।

५. **द्वादश ग्रन्थि–** मायाबाट शक्तिसम्म द्वादश ग्रन्थिहरूको स्थान जान्नु जरुरी छ । मायाग्रन्थि देहको उत्पत्तिको कारण हो । पाशव ग्रन्थि पशुहरूको संकुचित दृष्टिको कारण हो । यो ग्रन्थि कन्दमा छ । हृदयबाट लिएर ललाटसम्म पाँच कारण ग्रन्थिहरू छन् । यो पशुहरूको सृष्टिको कारण हो । यसको लागि यसको निरोध आवश्यक छ । निरोधनीय भएको कारण यसलाई ग्रन्थि भनिन्छ । ब्रह्मग्रन्थि हृदयमा, विष्णुग्रन्थि कण्डमा, रुद्रग्रन्थि तालु मूलमा, ईश्वर ग्रन्थि भ्रूमध्यमा, सदाशिव-ग्रन्थि ललाटमा अवस्थित छ । यसभन्दा माथि अरू पनि ग्रन्थिहरू छन् । ती सबै नाद शक्तिरूप छन् यसकारण निरोधिकामाथि अवस्थित छन् । तिनीहरूको नाम हो- इन्धका, दीपिका, वैष्णव, नाद र शक्ति । यो पनि परिचित प्रकाशमा आवरणस्वरूप छ ।

६. **तीन धाम–** चन्द्र, सूर्य र अग्निरूप धाम वाम, दक्षिण र मध्य स्थानसम्म व्याप्त भएर अवस्थित छन् । मानव देहको अधिष्ठाता तीन प्रकारका वायुबाट धामत्रयको सृष्टि भएको छ । इडा आदि नाडीत्रय र वायुत्रयबाट नियन्त्रित छ । वास्तवमा नाडीहरू असंख्य छन् र वायुबाट तिनको अधिष्ठान छ । परिचित शक्तिबाट प्रसुत अमृत धारा दिव्य शक्ति कामबाट उद्भूत हुन्छ । यो शक्ति नै आत्म धर्म हो, भगवान्को स्वरूप महिमा शिवको प्राणरूप सामर्थ्य हो । तर शक्तिको रूपमा व्यवहार भएर पनि त्यो स्वरूपबाट अलग होइन किनकि त्यो केवल स्वरूपमा आश्रित छैन । स्वरूपबाट अभिन्न तथा स्वरूपबाट एकरस पनि छ । यस चितिरूप ईश्वरको स्वातन्त्र्य शक्तिको सहारा लिएर योग परम पथतर्फ यात्रा गर्दछन् । त्यो सारा विश्वको मध्यभूत छ । त्यो विश्वको हृदय गुफामा अत्यन्तै गुप्तरूपबाट निहित (बसेको) छ ।

मानव निरन्तर श्वास-उच्छ्वासशील तथा नानाथरिका द्वन्द्वको उपघातबाट पीडित छ । यसकारण मध्यमार्गमा संचरणशील सबै वस्तुहरूको मध्यभूत यस शक्तिको साक्षात्कार प्राप्त गर्न सक्तैन । यसको लागि कुनै न कुनै प्रक्रियाद्वारा ती वृत्तिहरूलाई अभिभूत गर्न आवश्यक छ । विरुद्ध शक्तिहरूको विरोध उपशान्त भएपछि सुषुम्णास्थित मध्यम प्राण ब्रह्म हो । जब देहादिबाट अहंभाव त्याग हुनेछ र पूर्ण हिन्तामा समावेश सिद्ध हुन्छ तब सम्झनु पर्छ कि सबै भावनाहरू सफल भएका छन् । अहंभाव परामर्शको लागि यो क्रमशः गर्नुपर्छ, योगी पूर्ण हिन्तामय मूल मंत्रको साथ पराशक्ति सामरस्यको चिन्तन गर्छन् । यस्तो भावनाको फलस्वरूप प्राण आदि संस्पर्श शून्य स्पन्दको स्वयं उदय हुन्छ । यस स्पन्दबाट पूर्वोक्त सामरस्य प्राप्त गर्न कठिन हुँदैन । यहाँसम्म सिद्ध भएपछि भावना हावामा मंत्र वीर्यको सार समुदित हुन्छ । यही अभिमान उदयरूप रहस्य हो । यसपछि देह प्राण आदि परिच्छिन्न प्रमातामा अवस्थित अभिमानको परिहार गरेर यस अभिमानलाई आनन्दचरुबाट उठाएर मूलाधारमा स्थापित गर्नुपर्छ । यहाँसम्म प्रारम्भिक प्रक्रिया हो । यसपछि बोधक्रियाको पालो आउँछ । प्रथम आधार आदि सोह्र केन्द्रहरूलाई एक-एक गरेर वेध गर्नुपर्छ । वेधन कार्यमा कारण नाद हो । मंत्रात्मक प्राणरूपमा अथवा स्फुरताको उन्मेषरूपमा आविर्भूत हुन्छ । यहाँ सूक्ष्म योग र प्रयोगको अपेक्षा छ ।

उन्मिषित स्फुरताको तीव्र उत्तेजनाको संचार नै सूक्ष्म योग व्यापार हो । यसको प्रयोग यसप्रकारबाट हुन्छ कि प्राणात्मक मंत्र पूर्वोक्त उत्तेजनावश आफ्नो स्थान छोडेर केही माथि सुषुम्णा मार्गबाट आरोहण गर्दछ । कोलिल मतानुसार यस आरोहणको साथ-साथ सबै आधार र सबै ग्रन्थिहरूको वेध हुन जान्छ । वेध क्रिया समावेश रूप हो, यसमा कत्ति पनि संदेह छैन । द्वादशान्तमा प्रवेशको साथसाथै माहामायासम्म सारा बन्धन टुट्न जान्छन् । यसपछि ध्रुव पदको स्थिति हुन्छ । अन्तिम वेध सम्पन्न भएपछि महाव्याप्तिको आभिर्भाव हुन्छ । त्यो नित्य उदित पराशक्तिको सम्पन्न रूप हो । यहाँसम्म योग

सम्पन्न भएपछि पराशक्तिबाट अभिंता स्फुरित हुन्छ । अभिंता फेरि शिव तादात्म्य रूप हो । कौलिक प्रक्रियाको प्रथम प्रपंच यहींसम्म छ । परम शिवबाट अभिन्नता र त्यसको फल सबै यस प्रपंचअन्तर्गत छन् । यसपछि दोश्रो प्रपंच, दोश्रो द्वादशान्तमा प्रसरणशील जुन शक्ति धारा छ त्यसको सहायताको मध्यमार्गको पथमा हृदय अपूरित हुनुबाट परमानन्द प्रकट हुन्छ ।

यस आनन्दलाई परामृत प्रभाव जान्नु पर्छ । के यो कम आश्चर्यको कुरा हो कि हृदयमा प्रविष्ट परमानन्दले रसायनको कार्य गर्दछ ? जबसम्म ऊ हृदयमा रहन्छ तबसम्म भावना बताएर उसको स्वयं संवेद्यतालाई सम्पन्न गर्नुपर्छ । हृदयबाट उठेको उमङ्ग भरिएको परमानन्द धारालाई चारैतर्फ प्रवाहित गर्नुपर्छ जसबाट त्यो प्रभाव नाडीका अगणित तन्तुहरूमा मिल्न सकोस् । यसपछि अनुरूप ध्यान गर्नुपर्दछ । फेरि त्यस अमृतद्वारा बाहिर र भित्रको अन्तरलाई पूर्ण गर्नुपर्दछ । यसरी आफ्नो देह अमृतमय भएपछि त्यस प्रभावलाई तीव्र वेगबाट देहको रोमकूपहरूको बीचमा बाहिरको विषय समूहमा निरन्तर पठाइरहनु पर्दछ । त्यसपछि यस्तो ध्यान गर्नुपर्दछ कि शक्ति नाद ज्ञानबाट संसत जगत् आप्यचित भएको छ । यस ध्यानबाट अजर र अमरताको भाव आउँछ र आत्मसिद्धि हुन्छ ।

कौलिक शास्त्रमा यो प्रतिक्रिया मृत्यु जित्नको लागि उपदिष्ट भएको छ । तांत्रिक वाङ्मयमा पनि यस्तै या यसैसँग मिल्दोजुल्दो प्रतिक्रिया देखिन्छ । तांत्रिक गण भन्दछन् कि पहिले मत्तगंध स्थानको संकोच-प्रसारणरूप कुनै मुद्राद्वारा आफ्नो सूक्ष्म प्राण शक्तिको उद्बोधन आवश्यक छ । यस शक्तिको आश्रय गरेर पछिका क्रियाहरूको अनुष्ठान हुन्छ । यस स्पन्दनद्वारा आविष्ट मध्यमा कला नाम शक्ति कंद जन्म स्थानमा गुप्त अवस्थामा छ । कौल मतमा जन्मस्थान आनन्द इन्द्रिय हो । तांत्रिक प्रक्रियामा यो कन्द रूप हो । केवल यति नै फरक हो । योगीजनले बहुतै सावधानीबाट यस शक्तिको भावना तबसम्म गर्नुपर्दछ जबसम्म समावेश हुँदैन । यसपछि भावनाको बलबाट पादांगुष्ठमा स्थित कालाग्निको आश्रय आधारलाई आश्रय गरेर माथितर्फ आरोहणको प्रयत्न गर्नुपर्छ । यसपछि जो कन्दभूमिमा प्राप्त शक्ति स्पन्दात्मक वीर्यलाई त्यसमा हालेर प्रस्फुट भावनाद्वारा स्फुट गर्नुपर्दछ, त्यसपछि प्राण स्पन्दनरूप क्रिया शक्तिद्वारा त्यो वीर्य आपूरित हुन्छ । यसको मात्रा बढाउनाले देहको मध्यभूत नाडी प्राप्त हुन्छ । यसका पनि तीन प्रकार छन्- एक इच्छारूप हो, जसमा संकोच रुमजात ऊर्ध्व-आरोहणको प्रयत्न गर्नुपर्छ ।

दोश्रो हो भावना रूप, तेश्रो हो क्रिया रूप जसद्वारा ऊर्ध्व ग्रन्थिहरूको भेद वा वेद्य हुन्छ । यी ग्रन्थिहरू गुल्फ, जानु (घुँडा) मेदु र कन्दरूप छन् । मूल स्पन्दको आश्रय मत्तगंध-स्थानलाई बारम्बार खुम्चिनु र फैलिनु रूप क्रियाको मतलब निरोध हो । यो स्वच्छन्द शास्त्रमा वर्णित दिव्यकरण उपलक्षण हो । इडा र पिंगला पार्श्वस्थ यी दुई नाडीहरूको परित्याग गरेर इच्छालाई अवष्टम्भ योगद्वारा मध्य मार्गमा प्रवाहित गरेर महाप्राण ब्रह्म शक्तिद्वारा सुषुम्णाको आश्रय लिनुपर्छ । सुषुम्णामा प्रवेश भएपछि सबै इन्द्रियहरू तथा विषयबाट विरत हुनुपर्छ । तव मायारहित विज्ञानद्वारा (चिदात्मक ज्ञान शक्तिद्वारा) क्रमश: हृदय आदि स्थानहरूमा स्थित ब्रह्मादि कारण वर्गलाई एक-एक गरेर त्यागनु पर्दछ । यहाँ प्राणादिको प्राधान्यता छैन । यसकारण त्यसलाई विज्ञानरूप सम्झनु पर्छ यो सृष्टि आदि संवत् स्वभाव हो । यसपछि माया ग्रन्थिलाई भेद गरेर पंच आकाशको त्याग गर्नुपर्छ । तब शिवान्त कारण समूहमाथि विराजमान- समना नामक कुण्डली शक्तिलाई प्राप्त गर्नुपर्छ । त्यसैबाट गर्भ शून्याति शून्य अखिल विश्व कुण्डलजस्तै अवस्थित छ, यही परम शिव दशा हो ।

हरि ॐ तत्सत् ।

# जीवन-प्रेम

एउटी प्रेमिका आफ्नो मार्गमा गतिशील थिइन् । उनका प्रेमीले उनलाई ठीक बाह्र बजे कुनै स्थानमा भेट्न बोलाएका थिए र त्यतिबेला बाह्र बज्न केवल तीन मिनेट मात्र बाँकी थियो । आमा-बुबाको दृष्टि भने उनीमाथि थियो तर उनको ध्यान चाहिँ प्रेमीमा अडेको थियो । उनको आँखामा अरू कुनै तर्क, चिन्तन, धारणा नै थिएन । कसैले केही भनिरहेको वा रोकिरहेको छ भन्ने कुराको भान थिएन उनलाई । उनको त एउटै लक्ष्य भनेको आफ्नो प्रेमी थियो, उससँग मिल्नु थियो... र उनी त्यही बाटोमा घर-परिवारको आँखा छल्दै तीव्र गतिले अगाडि बढिरहेकी थिइन् ।

बीच बाटोमा 'अकबर' बादशाह चादर ओछ्याएर बसेका थिए । नमाजको समय भइसकेको थियो । उनी पाँचपटक नमाज पढ्थे । घुँडा टेकेर उनले अल्लाहको स्मरण गर्न शुरु गरे । तब त्यस चादरमा कुल्चेर प्रेमिका अत्यन्तै वेगका साथ अगाडि बढिन् । यो देखेर अकबरको पारो चढ्यो ।

अकबरले भने– कति मूर्ख, बेशरम केटी हो, यस्ता पनि स्त्री हुन्छन् ! मैले खुदासँग इबादत (प्रार्थना) गरिरहेको पनि यसले वास्ता गरिन, चादर ओछ्याएको पनि यसले हेरिन । हिन्दुस्तानको राजाले यहाँ बसेर नमाज पढिरहेको यसले थाहा पाइन ?

उनलाई एक क्षण बेचैनी भयो । यसबीच दुई मिनेट बित्यो, तीन मिनेट पनि बितेपछि प्रेमिका फर्केर आइपुगिन् । उनको चालमा पहिलेको जस्तो गति थिएन, उनको चालमा दौडाइको क्रिया थिएन । उनी एउटा मन्द नदी बगेजस्तै देखिन्थिन्– अत्यन्तै आनन्दले गुनगुनाउँदै, मस्त भएर... जसै उनी चादरनिर आइपुगिन्, त्यस चादरलाई कुल्चिएला कि भनेर तर्केर हिँडिन् । अकबरले उनको हात समातेर भने– तँ मूर्ख स्त्री होस्, तँलाई लाज लाग्दैन ? मैले खुदासँग इबादत गरिरहेको बेला तैँले चादरमा कुल्चेर गइस् ।

ती केटीले हाँस्दै भनिन्– मैले त तपाईंलाई देखेकै थिइन, तपाईं त्यस चादरमा बसिरहनु भएको मलाई हेक्का नै थिएन किनकि मेरो आँखामा त केवल प्रेमी बसेका थिए, मेरो लक्ष्य त प्रेमी थियो... तर तपाईंले त खुदालाई सम्झिरहनु भएको थियो, खुदामा आफ्नो ध्यान लगाइरहनु भएको थियो, तपाईंलाई कसरी थाहा हुन गयो कि म यहाँबाट गइरहेकी

थिएँ र मैले चादरमा टेकिरहेकी थिएँ ? तपाईंको ध्यान त मतिर पो रहेछ । तर मेरो ध्यान त आफ्नो प्रेमीतिर मात्र थियो... यसैकारण मैले तपाईंलाई देखिन... मैले चादरलाई पनि देखिन । मेरो त केवल एउटै इच्छा, एउटै उत्कण्ठा, एउटै भावना थियो– मैले ठीक समयमा प्रेमीसँग भेट्नु छ, परितृप्त हुनु छ ।

र, यही क्रिया, यही भावना र यही लक्ष्य प्रेमको हुन्छ, त्यसमा वासना हुँदैन, त्यसमा खुदाको इबादत हुन्छ, त्यसमा खुदाको पूजा हुन्छ, यसलाई साधना भनिन्छ, यसलाई इष्टको साक्षात्कार मानिन्छ... किनकि उसले अत्यन्तै बेगसँग हिँडेर त्यस प्रेमीमा, त्यस परमात्मामा लीन हुन जाने क्रियालाई जान्दछ... र लीन हुन्छ । त्यसबेला उसको सामु कुनै चादर हुँदैन, उसको सामु कुनै राजा हुँदैन, कुनै बन्धन हुँदैन, कुनै सिक्री हुँदैन ।

त्यसैले म भन्दछु 'प्रेम त स्त्रीले गर्न सक्दछिन्' । जुन बेला पुरुषको हृदयमा स्त्रीको भावना जाग्रत हुन्छ, त्यसबेला पुरुषको हृदय स्त्रीको रूपमा विकसित हुन्छ किनकि मनुष्यको सम्पूर्ण शरीर बुद्धिबाट ओतप्रोत छ, बुद्धिद्वारा नै चल्दछ, बुद्धिको माध्यमबाट गतिशील हुन्छ र स्त्रीको सम्पूर्ण शरीर हृदय पक्षबाट जागृत हुन्छ, हृदयको माध्यमबाट चल्दछ, हृदयको माध्यमबाट हेर्ने क्रिया गर्दछ । यसैले पुरुषले यदि प्रेम गर्दछ भने पनि स-साना कुरामा हिसाब गर्न थाल्छ । स्त्रीले यसो गर्न सक्दिनन्, उनी त एकैपटकमा डुब्छिन्, एकैपटक समाप्त हुन्छिन्, आफैलाई समर्पित गर्दछिन् ।

त्यसैले ती सन्तहरूले, ती योगीहरूले, ती चिन्तकहरूले जब इष्टको साक्षात्कार गरे, प्रभुसँग साक्षात्कार गरे तब एउटा कुरालाई स्पष्ट गरे– 'मैं तो रामकी बहुरिया'... म रामकी पत्नी बनेर नै प्रभुलाई प्राप्त हुन सक्दछु । कबीरले आफैलाई रामकी बहुरिया भनेका छन् । सूरले भने– म त रामकी पत्नी हुँ । मीराले भनिन्– मेरे तो गिरधर गोपाल दूसरो न कोई । वेदले भने– अहम ताम प्रभुतै वा पूर्वा: म त एउटी नारी हुँ जो ईश्वररूपी पुरुषसँग एकाकार हुन चाहन्छु, उनले आफैलाई स्त्री भनिन्, नारी भनिन् किनकि नारीमा हृदय पक्ष पूर्णरूपमा जाग्रत हुन्छ ।

शरीर पुरुषकै रहन्छ, पौरुष त्यही रहन्छ, त्यही वीरता रहन्छ, त्यही जोश रहन्छ, तर त्यो बुद्धि लोप हुन्छ, त्यो तर्क समाप्त हुन जान्छ । जहाँ तर्क हुन्छ, त्यहाँ प्रेम हुँदैन, जहाँ बुद्धि हुन्छ त्यहाँ प्रेम हुँदैन, प्रेम गर्नका लागि बुद्धि र तर्कलाई एउटा किनारामा छोड्नु पर्दछ ।

त्यसैले जब मेरो यस यात्रामा, यस समुद्रमा मसँग गतिशील हुँदा तिमीले आफ्नो तर्क र बुद्धिलाई किनारामा राखेर हिँड्नु पर्दछ, आफ्नो ध्यान र धारणालाई एकातिर राखेर नै हिँड्नु पर्दछ । आफ्नो शरीरको जडतालाई एकातिर राखेर नै हिँड्नु पर्दछ... किनकि जब तिमी मसँग बहन्छौ भने उन्मुक्त भावले बहनु पर्दछ, आफैमा पूर्णताका साथ बहनु पर्दछ किनकि म त्यस महासमुद्रको यात्रामा प्रत्येक क्षण तिम्रो साथ छु ।

–म साथ छु किनकि म तिमीलाई लहर बनाउन चाहन्छु ।

–म साथ छु किनकि म तिमीलाई लहर बन्ने क्रिया सिकाउन चाहन्छु ।

–म साथ छु किनकि म तिमीलाई सम्पूर्ण समुद्रको यात्रा गराउन चाहन्छु ।

–र, म तिम्रो साथ छु किनकि म तिमीलाई देखाउन चाहन्छु यस समुद्रलाई पनि आनन्दले पार गर्न सकिन्छ, यस समुद्रमा पनि मस्ती लिन सकिन्छ ।

यस संसाररूपी समुद्रमा जहाँ गोहीहरू छन्, जहाँ ह्वेलहरू छन्, जहाँ छल, जहाँ समस्याहरू छन्, जहाँ गहिराइ छ, जहाँ दु:ख छ, वेदना छ, जहाँ आँधीबेहरी छ... त्यस समुद्रमा तिमी लहरजस्तै अगाडि बढ्न सक्दछौ– मस्तीका साथ गुनगुनाउँदै, छलछलाउँदै । यसैले तिमीलाई भनेको हुँ तिमी लहर बन, यसैले तिमीलाई भनेको हुँ तिमी सुगन्धरूपी बतास बन किनकि प्रेमको कल्पना, प्रेमको भावना नदीलाई थाहा हुन्छ । नदी गंगोत्रीबाट प्रस्थान गर्दछ जहाँ खाल्डाखुल्डी छन्, जहाँ ठूलाठूला चट्टान छन्... तर नदीलाई त्यस कुराको परवाह नै हुँदैन । नदीले यस कुरालाई जान्दैन कि यो पहाड हो अथवा चट्टान हो । नदी त केवल अगाडि बढ्नका लागि गतिशील हुन्छ, निरन्तर गतिशील हुन्छ र उसको लक्ष्य, उसको चिन्तन, धारणा भनेको समुद्रमा गएर लीन हुने हुन्छ ।

र, जुन बेला तिमी पूर्णरूपमा लीन हुन चाहन्छौ, आफ्नो गुरुमा एकाकार हुन, साक्षात्कार हुन चाहन्छौ, आफ्नो प्रभुमा लीन हुन चाहन्छौ, आफ्नो गुरुमा एकाकार हुन

चाहन्छौ, तिमी साधना र सिद्धिहरूमा पूर्णता प्राप्त गर्न चाहन्छौ भने त्यस बेला तिमी लहर बनेर मसँग बहनु पर्दछ । प्रेमको परिभाषालाई बुझ, पहिलोपटक तिमी नवीन बाटोमा गतिशील बन... जब गतिशील हुन्छौ तब पहिलोपटक तिम्रो अनुहारमा मुस्कान आउनेछ, पहिलोपटक तिम्रो ओठमा एउटा कम्पन उत्पन्न हुनेछ, पहिलोपटक तिमीले महसुस गर्नेछौ जीवनको आनन्द, जीवनको मस्ती, चेतना, सौन्दर्य, सौभाग्य 'प्रेम' हो । आज म तिमीलाई यस संसाररूपी समुद्रमा, तिमीसँगै प्रेमजस्तै बहेर त्यस किनारामा पुऱ्याउनका लागि तयार छु ।

मेरो विश्वास तिमीहरुसँग छ, म आशीर्वाद दिन्छु तिमीहरुले जीवनमा आनन्द प्राप्त गर्न सक । एकपटक पुनः म तिमीहरुलाई आशीर्वाद दिन्छु । समाप्त । जय गुरुदेव !

अनुभव-अनुभूति

# गुरूकृपाबाट रोग निको भयो

म सिद्धाश्रम शक्ति केन्द्रमा २०६३ साल माघ १५ गते जोडिएको हुँ । त्यसै समयदेखि नै गुरुकार्य गर्न पाएकोमा मलाई धेरै आनन्द प्राप्त भयो । आश्रममा जोडिएपश्चात् धेरै अनुभूतिका कुराहरू यस मनले महसुस गर्ने मौका पायो । शुरुमा शरीर हलुका भयो । मेरा समस्याहरू पनि घट्दै गए । सद्‌गुरुदेवहरूको ध्यान गर्दा सहस्रारमा उहाँहरू विराजमान हुनुभएको झल्झली देख्थेँ । गुरुमन्त्र जप गर्दा मनमा आनन्दको अनुभूति भइरहन्छ ।

२०६५ साल कार्तिक महिनातिरको कुरा हो । अचानक पेटको रोग लागेर म अस्पतालमा आकस्मिक कक्षमा भर्ना भएँ । त्यहाँ मेरो रोग पत्ता लगाउन रगत, पिसाब आदिको जाँच गरियो । तर मलाई लागेको रोग भने डाक्टरहरूले पत्ता लगाउन सकेनन् । भिडियो एक्सरे आदि पनि गरियो तर पनि रोग पत्ता लाग्न सकेन । त्यसै राति अर्धनिद्राको अवस्थामा एकजना पितृलाई देखेँ । उहाँले मलाई आफूसँगै लिन आउनुभएको थियो क्यारे । उहाँले भन्नुभयो– 'मैले त दशैँको टीकाको दिनमा घरबारसहित सबैलाई त्यागेर आएँ, अब भाइ पनि मसँग हिँड्नुहोस्' । यस्तो सपना देखेकोले मलाई डर लाग्यो । मैले सद्‌गुरुदेवहरूको स्मरण गरेँ । तब उहाँ हराउनुभयो । फेरि केही समयपछि देखा परेर भन्न लाग्नुभयो– 'म आएको नौ महिनामा मेरो जहान पनि लिएर आएँ, अब भाइ पनि हिँड्नुहोस्' । तब मैले पुनः सद्‌गुरुदेवहरूलाई स्मरण गरेँ । त्यसपछि उहाँ टाढा हराउनुभयो ।

अस्पतालमा भोलिपल्ट दिउँसो फेरि पनि भिडियो एक्सरे गरियो । फेरि पनि रोगको बारेमा केही पत्ता लागेन । मेरो पेटमा केही पनि रोग नभएको देखियो । त्यसपछि मलाई कुनै नकारात्मक शक्तिको प्रभावले यस्तो भएको हो कि जस्तो लाग्यो । अनि मैले सद्‌गुरुदेवहरू तथा मातृशक्तिहरूसँग प्रार्थना गरेँ । तब केही समयपछि मैले त्यहीँ आश्रम झैँ देखेँ । सहस्रारमा भगवान् शंकरका साथमा दुवैतिर परमपूज्य सद्‌गुरुदेवहरू उभिनुभएको देखेँ । आफ्नो अगाडि पूजनीय गुरुमाता, महाशक्ति गोरखकाली मातालगायत मातृशक्ति तथा देवीदेवताहरू उभिनुभएर 'हामी छौँ, नडराउनू' भन्नुभएको सुनेँ ।

पछि जाँचबुझ गर्दाखेरि डाक्टरहरूले मेरो पेटमा खराबी भएको कुरा पत्ता लगाए । आन्द्रामा पीप जमेर कुहिसकेको, गन्हाएको रहेछ, मेरो अप्रेशन गर्नुपर्ने भयो । अप्रेसन गर्ने ठाउँमा लगेर मेरो अप्रेशन गरियो । केही दिनपछि अर्थात् मंसिर १ गते शनिबारको दिनमा मेरो पेट फुल्न थाल्यो, पेटमा ग्याँस बढ्दै गयो । केही पनि खान नहुने भयो । औषधि खाँदा पनि केही सीप लागेन । तब मलाई मेरो अन्तिम समय आएछ जस्तो लाग्यो । मैले सद्‌गुरुदेवहरूलाई स्मरण गर्न लागेँ । उहाँहरूलाई स्मरण गर्दागर्दै निदाउन पुगेछु । सपनामा म आश्रममा पुगेर साधक-साधिकाहरूसँग कुरा गरिरहेको थिएँ, त्यसबेला एकजना साधकले मेरो हात कुल्चनुभयो र ठूलो आवाज निकालेर हाँस्नुभयो । त्यस आवाजले म नराम्रोसँग तर्सिन पुगेँ । त्यसपछि म ब्यूँझेँ । ब्यूँझना साथ मेरो पेटबाट ग्याँस निस्कन थाल्यो तथा पखाला लाग्न थाल्यो । आइतबार दिरभरि नै पखाला लागिरह्यो र पेटको दुःखाइ हरायो । त्यसपछि मेरो पेटको रोग निको भयो ।

आश्चर्यलाग्दो किसिमले मेरो पेटको रोग निको भएको देखेर म त दङ्ग छु । तर यसको सम्पूर्ण श्रेय त परमपूज्य सद्‌गुरुदेवहरूलाई जान्छ किनकि उहाँहरूकै असीम कृपा, अनुकम्पाले मेरो रोग ठीक भयो । अस्पतालमा बिताउँदाखेरि गुरुदेवहरूलाई देखेका सपनाका कुराहरू, उहाँहरूको आश्वासनका कुराहरूको झल्झली सम्झना आइरहन्छ । यसबाट म हर्षले गद्‌गद् हुन्छु र परमपूज्य सद्‌गुरुदेवहरूलगायत मातृशक्तिहरूलाई सभक्ति धन्यवाद टक्र्याउँछु ।

जय गुरुदेव !

–राजेन्द्र रञ्जितकार

बाह्रबिसे, सिन्धुपाल्चोक

# चैते दशैं

चैत्र शुक्ल प्रतिपदादेखि प्रारम्भ हुने चैते दशैं वा चैत्र नवरात्रि नव संवत् वर्ष तथा वसन्त ऋतुको आगमनको सूचक हो । यस ऋतुमा सम्पूर्ण प्रकृति हराभरा हुन्छ र बोट वृक्षहरू रङ्गी-बिरङ्गी फूलहरूले शोभित हुन्छन् । यस्तो लाग्छ मानौं सम्पूर्ण धरती नाना प्रकारका पहिरन लगाएर देवताहरूको स्वागतका लागि उभिएकी हुन् । भनिन्छ यस कालमा सम्पूर्ण देवी देवताहरू पूर्ण चैतन्य भई खुशीसाथ धर्तीमा विचरण गर्नुहुन्छ र जहाँ-जहाँ पूजा-आजा, साधना, उपासना भइरहेको हुन्छ त्यहाँ सूक्ष्मरूपमा उपस्थित भई आशीर्वाद अथवा वरदान पनि दिनुहुन्छ ।

यस्ता देवी देवताहरूको आशीर्वाद प्राप्त गरेर साधक एकातिर आफ्नो मनोकामना पूर्ण गर्न सफल हुन्छ भने अर्कोतिर भविष्यका लागि एउटा यस्तो सुरक्षाचक्र पनि प्राप्त गर्न सफल हुन्छ जसले गर्दा उसका आगामी योजनाहरू निर्विघ्नरूपले पूरा गर्न समर्थ पनि हुन्छ । यस महत्त्वपूर्ण दिनमा सम्पूर्ण भू-मण्डल देवलोकसमान बन्न पुग्छ ।

यस्तो महत्त्वपूर्ण अवसरमा यदि साधकले सद्गुरुदेवको निर्देशनबमोजिम थोरै मात्रामा पनि साधना सम्पन्न गरेमा त्यसको धेरै गुणा फल प्राप्त हुन्छ । काली पुराणमा भनिएको छ–

**तांत्रोक्ते दशैं स्यात् गुरोः सान्निधिकारिका**
**स सिद्धः सफलः पूर्णः दुर्लभ जायते क्षणम् ।**

अर्थात् दुर्लभ योगसम्पन्न नवरात्रिमा यदि साधकलाई सद्गुरुको सान्निध्य पनि प्राप्त भएमा त्यसको सौभाग्यको तुलना नै गर्न सकिँदैन किनकि यस्तो अवसरमा साधक यस्ता साधना सम्पन्न गर्न सक्छ जसले उसको दुर्भाग्य लिपी नै मेटिएर सौभाग्यको रेखा कोर्न सक्छ ।

तन्त्र शास्त्र सम्पूर्णरूपले शक्तिमा आधारित छ । जति पनि साधकहरू भए, उनीहरूले कुनै न कुनै रूपमा जगदम्बाको साधना अवश्य सम्पन्न गरे, तत्पश्चात् उनीहरू सिद्धपुरुष कहलिए । चाहे रामकृष्ण परमहंस हुन् जसले भावयोगद्वारा माता कालीको साधना गरे वा वामाखेपा जसले माता तारालाई स्वयंमा आत्मसात् गरे र उनीसँग अभिन्न भए । साधनाबाट अपरिचित साधक साधिकाले गुरुको सान्निध्यमा मात्र माता भगवती जगदम्बाको साक्षात्कारको प्रक्रिया प्रारम्भ गर्नुपर्छ । जय गुरुदेव !

# राम नवमी

अयोध्याका राजा दशरथले आफ्ना गुरु वशिष्ठलाई आफ्नो राज्यको उत्तराधिकारी नहुने भएकोले त्यसको रक्षाको लागि निवदेन गर्दा गुरुले सान्त्वना दिएर शृङ्ग ऋषिलाई बोलाई उहाँको आचार्यत्वमा पुत्रेष्टि यज्ञको अनुष्ठान गर्नुभयो । त्यस यज्ञबाट साक्षात् अग्निदेव प्रकट भएर हवनीय द्रव्य प्रदान गर्नुभयो । सो चरु कौशल्या, कैकेयी र सुमित्रा तीनवटै रानीहरूले ग्रहण गर्दा सबै गर्भवती हुन गए र चैत्र शुक्ल नवमी अर्थात् रामनवमीका दिन कौशल्या रानीबाट जन्म भयो भगवान् श्रीरामको ।

श्रीरामनवमी सारा जगत्का लागि सौभाग्यको दिन हो किनकि अखिल विश्वपति सच्चिदानन्दघन श्रीभगवान् अर्थात् भगवान् विष्णुका अवतारहरूमध्ये सातौं अवतार यसै दिन अत्याचारी रावणको अत्याचारबाट पीडित पृथ्वीलाई मुक्त गराउन र सनातन धर्मको मर्यादालाई स्थापना गर्नका लागि त्रेता युगमा मर्यादापुरुषोत्तम श्रीरामको रूपमा प्रकट हुनुभएको थियो । कुनै पनि जीवले उहाँको आदर्श मर्यादा-लीला-उहाँको पुण्यचरित्रको श्रद्धापूर्वक गुणगान, श्रवण र अनुकरण गर्दछ भने उसको हृदय पवित्र भएर उसले परम सुख प्राप्त गर्न सक्दछ । श्रीरामसमान आदर्श पुरुष, आदर्श धर्मात्मा, आदर्श नरपति, आदर्श मित्र, आदर्श भाइ, आदर्श पुत्र, आदर्श गुरु, आदर्श शिष्य, आदर्श पति, आदर्श स्वामी, आदर्श सेवक, आदर्श वीर, आदर्श दयालु, आदर्श शरणागतवत्सल, आदर्श तपस्वी, आदर्श सत्यवादी, आदर्श दृढप्रतिज्ञ तथा आदर्श संयमी अरू को नै भएका छन् र ? जगत्को इतिहासलाई केलाएर हेर्दा श्रीरामको तुलनामा एउटा श्रीराम नै हुनुहुन्छ । साक्षात् परमपुरुष परमात्मा भएर पनि श्रीरामले जीवलाई सत्पथमा अग्रसर गराउनका लागि यस्ता आदर्श लीलाहरू रच्नुभयो जसको अनुकरण सबै मानिस सुखपूर्वक गर्न सक्दछन् । उनै श्रीरामको पुण्य जन्मदिवस चैत्र शुक्ल नवमी हो । यस सुअवसरमा सम्पूर्ण मानवले श्रीराम जन्मको पुण्योत्सव भव्यताका साथ मनाउनुपर्दछ । यस उत्सवको मुख्य उद्देश्य यो हुनुपर्दछ कि श्रीरामलाई प्रसन्न बनाउनु र श्रीरामका आदर्श गुणहरूलाई आफूमा पनि विकास गरेर श्रीरामको कृपा प्राप्त गर्ने अधिकारी बन्नु । त्यसैले श्रीरामका आदर्श चरित्रको अनुकरण गर्ने क्रियातर्फ नै हामी लाग्नुपर्दछ । जय गुरुदेव !

# शुभ-कामना

हाम्रा आत्मीय साधक श्री विनोदराज घिमिरे सुश्री शर्मिला पौडेलसँग विवाह बन्धनमा बाँधिनु भएको शुभ–अवसरमा उहाँहरुको सुखमय दाम्पत्य जीवनका लागि परमपूज्य सद्‌गुरुदेवहरुको चरणकमलमा सभक्ति प्रार्थना गर्दछौं ।

## सिद्धाश्रम शक्ति केन्द्र

सम्पर्क कार्यालय रामघाट, विन्ध्यवासिनी, लेखनाथ (कास्की) का सम्पूर्ण कार्यकर्ताहरु

# शुभ-कामना

यस युनिटमा गुरुकार्य गर्दै आइरहनु भएकी कार्यकर्ता साधिका शोभा गौतमको साधक नवराज आचार्यसँग शुभ विवाह सम्पन्न भएकोले उहाँहरुको सुखद दाम्पत्य जीवनको लागि परमपूज्य सद्‌गुरुदेवहरुसँग हार्दिक प्रार्थना गर्दछौं ।

- श्री अन्नपूर्ण पुष्टता युनिट, सि.श.के. परिवार

# शुभ-कामना

हाम्री बहिनी सुश्री सरिता पाठक श्री केशव सिलवालका साथ वैवाहिक बन्धनमा बाधिँनु भएको अवसरमा उहाँहरुको सुखद दाम्पत्य जीवनको लागि परमपूज्य सद्‌गुरुदेवहरुसँग हार्दिक प्रार्थना गर्दछौं ।

हजुरआमा **दुर्गालक्ष्मी पाठक**, बुवाआमा **भरतप्रसाद/लक्ष्मी पाठक**, दाजुभाइ **उत्तम/उत्कल पाठक**, दिदीबहिनी **अमृता त्रिपाठी/उरुषा पाठक** तथा **समस्त पाठक परिवार**

फागुनदेखि वैशाखसम्मको अवधि हावाहुरी बढी आउने समय हो । आगो बाल्दा सुरक्षित ठाउँमा मात्र बाल्ने, सलाई, लाइटर, मट्टीतेल आदि ज्वलनशील वस्तु केटाकेटीले भेट्ने ठाउँमा नराख्ने । केटाकेटीलाई जथाभावी आगो बाल्दा हुन सक्ने आगलागीका दुर्घटनाहरूबारे सम्झाई-बुझाई गर्ने र यस्ता कुराहरूबाट सजग रहन जनचेतना बढाउने कार्यमा सहयोग गरौं ।

नेपाल सरकार

**सूचना तथा सञ्चार मन्त्रालय**

सूचना विभाग

# आफ्नो हात आफै हेरौँ

यस स्तम्भअन्तर्गत हस्तरेखा विज्ञानअनुसार मानिसको हातमा रहेका विभिन्न पर्वतहरूको बारेमा हामीले चर्चा गर्दै आइरहेका छौँ । प्रत्येक पर्वतको आफ्नै महत्त्व र स्वभाव रहेको हुन्छ जसअनुसार यस अंकमा मङ्गल पर्वतको बारेमा चर्चा गरिएको छ । यो लेख पढेर तपाईं पनि आफ्नो हातमा रहेको मङ्गल पर्वतको स्थितिबारे अध्ययन गरी आफ्नो स्वभावबारे जान्न सक्नुहुन्छ । यस स्तम्भको बारेमा कुनै प्रतिक्रिया भए हामीलाई पठाउन सक्नुहुनेछ ।

## मङ्गल पर्वत

हातमा दुईवटा मङ्गल हुन्छन् जसलाई उन्नत मङ्गल र अवनत मङ्गल भनिन्छ । जीवन रेखाको प्रारम्भिक स्थानको तल र त्यसले घेरिएको शुक्र पर्वतभन्दा माथि जुन फैलिएको भाग छ, त्यही नै मङ्गल पर्वत हो । मूलरूपमा यो पर्वतलाई युद्धको प्रतीक मानिन्छ । मङ्गलप्रधान व्यक्ति साहसी, निडर तथा शक्तिशाली हुन्छ ।

जुन हातमा मङ्गल पर्वत बलवान् हुन्छ ऊ कायर तथा कमजोर हुँदैन । यस्तो व्यक्तिको जीवनमा दृढता र सन्तुलन हुन्छ । यदि हातमा मङ्गल पर्वतको अभाव देखिन्छ भने त्यस व्यक्तिलाई कायर मान्नु पर्दछ ।

मङ्गल-पर्वत-प्रधान व्यक्ति हृष्टपुष्ट तथा अग्लो हुन्छ । धैर्य र साहस यस्तो व्यक्तिका प्रधान गुण हुन् । जीवनमा यस्तो व्यक्तिले अन्यायलाई रत्तिभर पनि सहन सक्दैन । यस्तो व्यक्ति प्रहरी विभाग वा सैनिकमा अत्यन्तै उच्च पदमा पुग्दछ । यस्तो व्यक्तिमा शासन गर्ने जन्मजात गुण हुन्छ तथा यस्तै व्यक्ति समाजमा नेतृत्व गर्न सक्षम हुन्छ ।

यदि मङ्गल पर्वत अत्यन्तै विकसित छ भने त्यो व्यक्ति दुराचारी, अत्याचारी तथा अपराधी हुन्छ । समाजविरोधी कार्यहरूमा त्यो सधैँ अगाडि रहन्छ । उसको स्वभाव लडाकू हुन्छ । आफ्नो कुरालाई जबर्जस्ती मनाउने स्वभावको हुन्छ । यस्तो व्यक्ति कुरैकुरामा झगडा गर्ने, आफ्नो अधिकारका लागि सबै कुरा बलिदान गर्ने, लम्पट तथा धूर्त हुन्छ ।

मङ्गल पर्वतको झुकाव शुक्र क्षेत्रतिर छ भने यो निश्चित छ कि त्यस व्यक्तिमा सद्गुणको अपेक्षा दुर्गुण विशेष हुन्छन् । यति मात्र होइन प्रत्येक आवेगको तीव्रता पनि हुन्छ । यस्तो व्यक्तिले यदि शत्रुता राख्यो भने भयङ्कर शत्रु हुन्छ र यदि मित्रताको व्यवहार गर्दछ भने आफ्ना सबै कुरा बलिदान गर्नका लागि पनि तयार हुन्छ । यस्तो व्यक्ति झूटो शान, व्यर्थको आडम्बर तथा प्रदर्शनप्रिय हुन्छ । यद्यपि यस्तो व्यक्ति स्वयं डरपोक हुन्छ । तर अरूसँग छट्टु स्यालजस्तै धम्की दिएर काम लिन माहिर हुन्छ ।

सहीरूपमा भन्ने हो भने यस्तो व्यक्ति रूखो 'कर्कश एवं कठोर' हुन्छ । यदि मङ्गल पर्वतमा विशेष रूपमा रेखाहरू देखिन्छन् भने यो बुझ्नुपर्दछ कि यस्तो व्यक्ति युद्धप्रिय हुन्छ । पछि गएर यस्तो व्यक्ति या त सेनाध्यक्ष बन्दछ अथवा भयंकर डाँका बन्दछ । जोशिलो भावनाको प्रवेश गराएपछि यस्तो व्यक्ति सबै कुरा बलिदान दिन तत्पर हुन्छ । मङ्गल पर्वतमा त्रिकोण, चतुर्भुज वा कुनै प्रकारको विन्दु शुभ हुँदैन । यस्तो चिह्नले रोगको संकेत गर्दछ र रगतसम्बन्धी रोगले उसको जीवनमा बारम्बार सताइरहन्छ ।

यदि मङ्गल पर्वत राम्रोसँग विकसित छ तथा साथसाथै हातको रङ पनि लालिमायुक्त छ भने त्यो व्यक्ति निश्चय

नै उच्च पदमा पुग्दछ । जीवनमा उसले सङ्घर्ष एवं बाधाहरूको वास्ता गर्दैन र ऊ आफ्नो लक्ष्यसम्म पुगन पूर्ण सफल हुन्छ । पहेँलो रङले व्यक्तिलाई अपराध भावनातिर प्रवृत्त गर्दछ । यदि हातको रङले सामान्यरूपमा निलोपना लिएको छ भने यस्तो व्यक्ति सन्धिवातको रोगी हुन्छ ।

यस्तो व्यक्ति महत्त्वाकांक्षी हुन्छ र आफ्नो लक्ष्यप्रति लगातार ध्यान रहन्छ । जीवनमा यस्तो व्यक्ति लक्ष्यतर्फ भने बढिरहन्छ । यदि व्यापारको क्षेत्रमा प्रवेश गर्दछ भने यस्तो व्यक्तिले मेडिकल आदिमा विशेष सफलता प्राप्त गर्न सक्दछ ।

यदि मङ्गल पर्वत उठेको छ र हातका औँलाहरू कोणदार छन् भने व्यक्ति आदर्शप्रिय हुन्छ । वर्गाकार औँला यस कुराको सूचक हो कि व्यक्ति व्यावहारिक हुन्छ तथा जीवनमा सोचविचार गरेर पाइला चाल्ने हुन्छ । यस्तो व्यक्ति चतुर र चलाख हुन्छ तथा आफ्नो हितमा विशेष ध्यान राख्ने हुन्छ । यदि औँलाको गाँठो ठूलो छ र मङ्गल पर्वत उन्नत छ भने व्यक्ति तर्क गर्ने तथा जीवनमा सोचविचार गरेर कार्य गर्ने हुन्छ । यदि मङ्गल पर्वतमा क्रस चिह्न देखिन्छ भने त्यो व्यक्तिको मृत्यु निश्चय पनि युद्ध वा छुरा प्रहारबाट हुन्छ । यदि मङ्गल पर्वतमा बाङ्गा टेढा रेखाहरू छन् भने र त्यसबाट जालोजस्तो बनेको छ भने निश्चय नै उसको मृत्यु दुर्घटनाबाट हुन्छ ।

वस्तुत: मङ्गल पर्वतबाट नै व्यक्ति साहसी, निर्भीक र स्पष्टवक्ता बन्दछ । क्रमश: जय गुरुदेव !

कविता

## मेरा गुरु

गुरु तिमी हौ सब थोकका धनी
सद्ज्ञान छर्ने तिमी एक हौ मुनि
धनी गरीबको पनि भेद नगर्ने
ज्ञान गुनको बाटो सबलाई देखाउने
तिमी नै हौ मेरो दिलका सहारा
तिमीबिना छ शून्य जीवन सारा
गुरु तिमीलाई म प्रणाम गर्छु
तिम्रै चरणमा म यो शिर राख्छु ॥

–मुकुन्दप्रसाद न्यौपाने,
लाजिम्पाट

**कण कणमा गोरख जगाऔँ ।**

## गुरुवाणी

**तिमी ममा मेरो वास्तविक स्वरुपलाई खोज्न चाहन्छौ ? तर कहाँ ? कुन ठाउँमा ? कुन प्रकारले ? के तिमीमा खोज्ने कलाको ज्ञान छ ? मलाई तिमीले मञ्चमा खोजेर भेट्टाउन सक्तैनौ । त्यहाँ मलाई पाउन सकिन्न, मूर्तिहरुमा पनि तिमीले मलाई फेला पार्न सक्तैनौ । मलाई खोज्नु छ भने प्रेममा खोज– म त्यहाँ भेटिनेछु किनकि मेरो जीवनको सरसता, अस्मिता नै प्रेममय छ । तिमीले मलाई शीतको थोपामा खोज, म त्यहाँ मुस्कुराइरहेको अवस्थामा भेटिनेछु । प्रातःकालमा शीतका ससाना थोपामा खोज्यौ भने म त्यहाँ भेटिनेछु । म फूलहरुसँगै झुलिरहेको देखिनेछु । पुतलीहरुको नृत्यमा तथा भमराको गुञ्जनमा यदि मलाई देख्न चाहन्छौ भने म त्यहाँ बसिरहेको भेटिनेछु । बादलहरुको गर्जन, बिजुलीको चपलता अनि मन्द-मन्द वर्षामा म अवश्य नै भेटिनेछु । तिमीले गर्दनलाई अलिकति झुकाएर आफ्नो हृदयमा नियालेर हेर त, म त सशरीर त्यहीँ मुस्कुराएर बसिरहेको छु ।**

# पाइल्स रोगको सजिलो उपचार

हाल नेपालमा प्रमुखरूपमा देखिएका तीनवटा रोगहरू पाइल्स, महिलाको आङ खस्ने समस्या तथा ढाड दुख्ने समस्या हुन् । यी रोगहरूको उपचारका लागि नेपाल सरकारले विशेष उपचार प्याकेज कार्यक्रम ल्याइरहेको छ । ती तीन रोगहरूमध्ये पाइल्समा आयुर्वेद चिकित्साबाट गरिने क्षार सूत्र सर्जरी धेरै प्रभावकारी देखिएको छ ।

आयुर्वेद शिक्षण अस्पताल कीर्तिपुरमा यसको सर्जरी भइरहेको छ । नेपालमा विशेषज्ञहरूको अभावमा यो शल्यक्रिया त्यति सुचारुरूपमा सञ्चालित हुन सकेको थिएन । एलोप्याथिक सर्जरी गर्दा धेरै रगत बग्ने, दिशा थाम्न नसक्ने, महंगो हुने साथै रोग बल्झिने सम्भवना हुन्छ जसका कारण बिरामीहरूले धेरै दुःख भोग्नुपर्दछ । तर क्षार सूत्रबाट गरिने शल्यक्रियाका कम पार्श्व असर हुन्छन् भने प्रभावकारिता पनि त्यतिकै बढी हुन्छ ।

**उपयोगिता**

निम्न रोगहरूमा क्षार सूत्र सर्जरी फाइदाजनक हुन्छ–

१. फिस्टुला इन एनो(Fistula in Ano), भगन्दर
२. अर्श (Piles)
३. परीकर्तिका(Fissure in Ano)
४. अर्बुद (Tumor)
५. पाइलोनाइजल साइनस
६. नाडीव्रण
७. दुष्ट व्रण
८. पोलिप (Polyp)

**क्षारसूत्र सर्जरीबाट फिस्टुला र पाइल्स रोगमा हुने फाइदाहरू :**

१. स्थानीय घात कर्म तथा शरीरका स्थानीय तन्तुको ह्रास कम मात्रामा हुन्छ ।
२. रक्त स्राव (Bleeding) कम हुन्छ ।
३. एलोप्याथिक अप्रेसनबाट धेरै मात्रामा रगतको ह्रास हुन्छ, कहिलेकाहीं रगत दिनुपर्ने (Blood transfusion) अवस्था पनि आउँछ ।
४. संज्ञाहरण (Anasthesia) को आवश्यकता पर्दैन ।
५. अस्पतालमा भर्ना भएर रहनुपर्दैन ।
६. एलोप्याथिक अप्रेसन जस्तो ड्रेसिङ्ग गर्नुपर्दैन ।
७. दिसा थाम्न नसक्ने स्थिति आउँदैन ।
८. उपचार तुलनात्मक रूपमा सस्तो हुन्छ ।
९. घाउको खत (Scar) थोरै मात्रामा बस्छ । तर एलोप्याथिक अप्रेशन गर्दा ठूलो कुरूप खत देखिन्छ ।
१०. एलोप्याथिक अप्रेशन गर्दा फेरि फेरि बल्झिने सम्भावना हुन्छ तर क्षार सूत्रबाट गरिएको अप्रेशनबाट रोग फेरि बल्झने सम्भावना हुँदैन ।

**के हो त क्षार सूत्र ?**

क्षार सूत्र दुई शब्दले बनेको छ- क्षार र सूत्र । यहाँ क्षार भन्नाले अल्काली (Alkali) भन्ने बुझिन्छ । सूत्र भन्नाले धागोलाई जनाउँछ । क्षारलाई सूत्रयुक्त धागोमा २१ पटक लेप गरी बनाएको औषधियुक्त धागोलाई क्षार सूत्र भनिन्छ । क्षार सूत्र बनाउनको लागि प्रयुक्त हुने मुख्य द्रव्यहरू स्नुही दूध, अपामार्ग क्षार, हरिद्रा चूर्ण आदि हुन् ।

१. क्षार मुख्यतया औषधियुक्त बोट बिरुवालाई जलाएर बनाइन्छ । मुख्यरूपमा क्षार सूत्र बनाउनको लागि प्रयुक्त हुने क्षार अपामार्ग अर्थात् दतिवन क्षार हो । अपामार्ग क्षार बनाउनको लागि अपामार्गको पञ्चाङ्ग लिएर त्यसलाई शुष्क गरेर सुकाएपछि अग्निमा जलाएर भस्म बनाइन्छ । त्यस भस्मलाई ६ गुणा जलमा घोलेर २१ पटक सुती कपडाले छानिन्छ । त्यस घोललाई फलामको कराईमा राखेर पकाइन्छ । जब त्यसमा उग्र गन्ध आउन थाल्छ तथा निर्मल र चिपचिपा हुन थाल्दछ फेरि त्यसलाई छानेर दुई भाग गरिन्छ । एक भाग क्षारोदक र दोस्रो भाग तल बसेको किट्ट भाग क्षार हुन्छ ।

२. स्नुही दुग्ध : यसको संग्रह स्नुहीको काण्डलाई भेदन गरी गरिन्छ । भेदित स्थानबाट दूध निस्कन थाल्दछ । त्यसलाई काँचको भाँडामा संग्रह गरिन्छ । यसको दूधमा अग्नि गुण भएकोले प्रत्येकपटक ताजा दूध

लिनुपर्दछ । चाँडै जम्नबाट रोक्नको लागि त्यसमा हरिद्रा चूर्ण मिसाइन्छ। यसको संग्रह मुख्यतया शरद ऋतुमा गरिन्छ ।

३. हरिद्रा चूर्ण : यसको लागि हारिद्राको कन्दलाई टुक्राटुक्रा गरेर सुकाएर धूलो बनाइन्छ । सुती कपडाले छानेर ग्लास जारमा संग्रह गरिन्छ ।

४. सर्जिकल थ्रेड (Barbour thread 2-0): क्षार सूत्र बनाउनको लागि २-० नाइलन धागो (Barbour thread) लिइन्छ। सूत्र छान्दा दुई वटा कुरामा ध्यान दिनुपर्दछ– १) धागोको टेन्साइल स्ट्रेन्थ उपयुक्त हुनुपर्दछ र २) धागो धेरै मोटो वा धेरै पातलो हुनु हुँदैन ।

**क्षार सूत्र बनाउने विधि :**

क्षार सूत्र बनाउने धागोलाई ह्याङ्गर्समा फैलाइन्छ। त्यसपछि स्नुही दूधको लेप गरिन्छ । स्नुही दूधको लेप गज पिस (Gauze piece) ले गरिन्छ। स्नुही दूधको लेप एघार पटक गरिन्छ । सबै लेप सुकेपछि अर्को लेप गरिन्छ । १२ दिन (१२ लेप) पहिलो स्नुही दूधले गरिन्छ त्यसपछि अपामार्ग क्षार फैलाइन्छ । यो क्रिया सातपटक गरिन्छ । पछि फेरि स्नुही दूधको लेप गरेर हरिद्रा चूर्ण त्यसमा फैलाइन्छ । यो क्रिया तीनपटक गरिन्छ। यस्तै गरी २१ पटकमा क्षार सूत्र तयार गरिन्छ। क्षार सूत्र तयार भइसकेपछि त्यसलाई १० देखि ११ इन्चको लम्बाइमा काटेर ग्लास ट्युबमा पोलिथिनमा प्याक गरिन्छ ।

–डा. रामअधार यादव
(लेखक आयुर्वेद क्याम्पस कीर्तिपुरमा शल्य-शालक्य (Surgery & ENT) विभागका उप-प्राध्यापक हुनुहुन्छ)

## सिद्धाश्रम शक्ति केन्द्र सम्पर्क कार्यालय बनेपा (काभ्रे) सरेको जानकारी

सिद्धाश्रम शक्ति केन्द्रको बनेपा (काभ्रे) स्थित सम्पर्क कार्यालय पहिला रहेको स्थान (विद्युत् प्राधिकरण नजिकै) बाट हाल अरनिको राजमार्गबाट दक्षिणतर्फ नगरपालिका कार्यालयभन्दा पछाडि सरेको छ । सम्पूर्ण साधक साधिका तथा भक्तजनले उक्त स्थानको जानकारीको लागि तलको नक्सा हेर्नुहोला ।

## श्रद्धाञ्जली

जन्म
२००५ वैशाख १७ गते

स्वर्गारोहण
२०६४ पौष २४ गते

**स्वर्गीय भीमप्रसाद आचार्य (राजु)**

हाम्रा दाई तथा साधक भीमप्रसाद आचार्य (राजु)को असमायिक निधन भएकोमा परमपूज्य सद्‌गुरुदेवहरूको चरणकमलमा उहाँको आत्मालाई चिर शान्ति प्राप्त होस् भनी प्रार्थना गर्दछौँ ।

**बहिनी शारदा पुडासैनी**

**सम्पूर्ण पुडासैनी तथा आचार्य परिवार**

## हार्दिक समवेदना

जन्म
२०५२ चैत्र १४

स्वर्गारोहण
२०६५ फाल्गुण १०

**स्वर्गीय सुवास थापा**

यस विद्याश्रममा कक्षा ३ मा अध्ययनरत छात्र सुवास थापाको असमायियक निधनले हामी मर्माहत भएका छौं । यस दुःखद घडीमा शोक सन्तप्त परिवारलाई धैर्य धारण गर्न सक्ने क्षमता प्राप्त होस् भनी परमपूज्य सद्‌गुरुदेवहरूसमक्ष हार्दिक प्रार्थना गर्दछौं । यस विद्याश्रममा रहँदा उहाँको अध्ययनप्रतिको लगाव र गुरुभक्तिलाई हामी सदा स्मरणीय गरिरहनेछौं ।

**गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रम परिवार**

## हार्दिक समवेदना

जन्म
२०२९ फाल्गुण १० गते

स्वर्गारोहण
२०६५ माघ २२ गते

**स्वर्गीय पार्वती भण्डारी**

यस केन्द्रकी कार्यकर्ता साधिका पार्वती भण्डारीको असमायिक निधनप्रति दुःख व्यक्त गर्दै शोक सन्तप्त परिवारप्रति हार्दिक समवेदना व्यक्त गर्दछौं । साथै, मृतक आत्माको चिर शान्तिका लागि परमपूज्य सद्‌गुरुदेवहरूको चरणकमलमा हार्दिक प्रार्थना गर्दछौं ।

**सिद्धाश्रम शक्ति केन्द्र परिवार**

# परमपूज्य सद्गुरुदेवको अवतरण यात्रा

**यस स्तम्भअन्तर्गत परमपूज्य सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको रहस्य नै रहस्यले भरिएको अवतरण यात्रालाई क्रमश: प्रकाशित गर्दै आएका छौँ । आशा छ यसबाट पाठकवर्ग लाभान्वित हुनुहुनेछ ।**

## अद्वितीय ज्योतिष डा. नारायण दत्त श्रीमालीज्यू

ज्योतिषीहरू काल-दर्शनको लागि सानाठूला साधना गर्ने गर्दछन् जसमध्ये कर्णपिशाचिनी साधना पनि एक हो । यो साधना सिद्ध गरेका थुप्रै व्यक्तिहरू भेटिन्छन् जसले कर्णपिशाचिनीसँग सोधेर कसैको भूतकाल स्पष्ट बताउन सक्दछन् । यसरी भूतकालको कुराबाट ग्राहकलाई आश्चर्यचकित पारेपछि उनीहरूले हुने-नहुने भविष्य बताएर ठूलो रकम पडकाउन पनि सक्छन् । तर यस्तो भविष्य त कर्णपिशाचिनीसँग सोधेर भनिएको हुँदैन किनकि कर्णपिशाचिनीबाट भूतको ज्ञान सम्भव भए पनि भविष्यको ज्ञान भने पाइँदैन । भविष्य ज्ञानका लागि ज्योतिष एवं हस्तरेखाको विस्तृत ज्ञान हुनु आवश्यक हुन्छ । यस्तो ज्ञान आजभोलि धेरै कम व्यक्तिहरूमा मात्र पाइन्छ । परमपूज्य गुरुदेवले यसको आवश्यकतालाई बुझेर नै करिब एक सयभन्दा बढी ग्रन्थको रचना गरेर ज्योतिष विधाको पुनर्स्थापना गर्नुभएको छ ।

ज्योतिषका लुप्तप्राय: सूत्र तथा योगहरूलाई उहाँले खोजी गर्नुभयो । पूज्य गुरुदेवले ज्योतिषको माध्यमबाट समाजका समस्त तनावहरूलाई समाप्त गरेर आनन्द प्राप्तिको मार्ग देखाउनु भयो । वास्तवमा ज्योतिषको माध्यमबाट ग्रहको गति, स्थिति आदि स्पष्ट गरेर सृष्टिको उत्पत्ति तथा लयको ज्ञान प्राप्त गर्नु थियो । यही चिन्तन जब एउटा मानव, समाज, देश अथवा प्रकृतिका लागि आवश्यक सम्झिइन्छ भने त्यसले उसको भूत, भविष्य पनि स्पष्ट गरिदिन्छ ।

जोधपुरको प्रचण्ड गर्मीमा एकदिन डा. श्रीमालीज्यूकहाँ दिल्लीबाट आएका एकजना नेताले आफ्नो हात हेराउँदै थिए । उनी मन्त्रीमण्डलको हेरफेरलाई लिएर अत्यन्तै चिन्तित थिए । तब रोटी चपाउँदै गरेको एकजना भिखारीले अलिकति खुलेको ढोकाबाट हात बढाएर भन्यो– दुई-चार पैसा मिल्ला कि ? कोमल एवं दयालु हृदयका गुरुदेव डा. श्रीमालीज्यू उठ्नुभयो । जब उहाँले एउटा चार आनाको सिक्का भिखारीलाई दिँदै हुनुहुन्थ्यो, उहाँ अकस्मात् रोकिनुभयो किनकि उहाँको दृष्टि भिखारीको हत्केलाको एउटा रेखामाथि परेको थियो । उहाँ केही सोच्न थाल्नुभयो र भिखारीको हात समातेर भित्र तान्नुभयो । नेताजीलाई यो सह्य भएन । उनले यस कार्यको विरोध गरे । श्रीमालीज्यूले भन्नुभयो– यसका रेखाहरूबाट स्पष्ट हुन्छ कि यो मानिस धनी छ र यसले गुप्तचर विभागमा नोकरी गर्दछ । बाध्य भएर भिखारीले आफ्नो परिचय-पत्र देखायो । परिचय-पत्र देखेर नेताजी आश्चर्यचकित भए किनकि ती भिखारी गुरुदेवले भन्नुभएझैं गुप्तचर विभागमा उच्च पदमा आसीन थिए ।

परमपूज्य गुरुदेवका पुस्तकहरूले पनि समाजमा ज्योतिष र ज्योतिषीहरूलाई सम्मान दिलाएको छ, यो अत्यन्तै उच्च कार्य हो । यस्ता पूज्यपादको श्रीचरणमा स्थान पाएर यदि हामी पनि सागरबाट केही थोपा प्राप्त गर्न पाउँछौं भने हाम्रो जीवन चमत्कृत हुनेछ । क्रमश: जय गुरुदेव !

# मोटोपना घटाउने हो कि?

आवश्यक परिमाणभन्दा बढी मात्रामा शरीरमा मांस (Muscular tissue) वा मेद धातु (Adipose tissue) जम्मा हुनुलाई सामान्य भाषामा मोटोपना भन्न सकिन्छ। कतिपय व्यक्तिहरू जन्मदेखि नै मोटा हुन्छन्। प्राय: व्यायाम नगर्ने, हर समय खानपानमा व्यस्त रहने, एक ठाउँमा मात्र बसेर कार्य गर्ने अर्थात् अल्छी जीवन (Sedentary lifestyle) बिताउने व्यक्तिलाई मोटोपनाले सताउने गर्दछ। शरीरमा रहेका हार्मोनहरूको गडबडीले, बढी मात्रामा गर्भनिरोधक चक्की खानाले पनि एक्कासी तौल बढेको पाइन्छ। प्रोटिन कम भएको तथा कार्बोहाइड्रेट र बोसो (Fat) पदार्थ बढी भएको खाना बढी खानाले पनि मोटोपन बढ्दछ।

निम्न रोगहरूका कारणले पनि मोटोपना बढ्न सक्दछ- जस्तै: हाइपोथाइरोइडिज्म (Hypothyroidism), वंशाणुगत (Genetic disorder), कुसिङ्ग रोग (Cushing's disease), इन्सुलिनोमा (Insulinoma), हाइपोथ्यालामिक विकृति (Hypothalamic disorders) आदि। त्यसैले यी कारणहरूबाट मोटोपन बढेको भए खानपानमा सुधार र योग गरेर मात्र हुँदैन। सम्बन्धित रोगहरूको पहिले उपचार गर्नुपर्ने हुन्छ।

योगमा विश्वास गर्नेले सबै रोगहरू योगबाट मात्रै ठीक हुन्छ, आयुर्वेद औषधि प्रयोग गर्नेले आयुर्वेदबाट मात्र ठीक हुन्छ र एलोप्याथिक औषधि खानेले त्यसैबाट मात्र रोग ठीक हुन्छ भन्ने भ्रम धेरैले पालेको पाइन्छ। कतिपय अवस्थामा यस्ता धारणाहरू पूर्णरूपले गलत हुन सक्छन्। रोग उपचार गर्दा जहिले पनि त्यसको कारण खोज्नुपर्दछ र कारण हटाउन जुन जुन पद्दतिको सहयोग लिनु पर्ने हो ती पद्दतिहरूको माध्यमबाट उपचार गर्नुपर्दछ। यसरी रोगका कारणहरू हटाइसकेपछि गरिने योग र आयुर्वेदको अभ्यासले आउँदा दिनमा निरोगी रहन, रोग प्रतिरोधात्मक क्षमता बढाउन र शरीरलाई उचित बनावट दिनका लागि मद्दत पुऱ्याउँछ।

मोटोपनको उपचार गर्नुपूर्व मोटोपन के कारणले भएको हो त्यसको भित्री कारण बुझ्नु जरुरी हुन्छ। जस्तै: धेरै मिठाई एवं दूधजन्य परिकार सेवन गर्ने व्यक्तिले उक्त खाद्य पदार्थ सेवन गर्न रोक्नुपर्दछ। एकै स्थानमा बसेर कार्य गर्नेहरु जस्तै व्यापारीवर्ग, उपल्लो दर्जाका कर्मचारी, सधैँ आरामदायी सवारी साधनमा मात्र यात्रा गर्नेहरूले खानपानमा सजग हुनुका साथै योग अभ्यासलाई अपनाउनु पर्ने हुन्छ। अन्य रोगका कारणहरूबाट भएको भए ती रोगहरूको उपचार गर्नुपर्ने हुन्छ।

मोटोपना बढ्दै गएमा, खानपानमा सुधारका साथै उचित व्यायाम नगरेमा, उपचार नगरेमा पछि गएर निम्न रोगहरूले सताउने गर्दछन्- उच्च रक्तचाप (Hypertension), मधुमेह (Diabetes), विविध प्रकारका मुटुरोगहरू जस्तै: हृदयघात (Myocardial infraction), कोरोनरी आर्टरी डिजिज, विबन्ध (Constipation), ज्यादै पसिना आउने (Over sweating), अर्बुद रोगहरू (Endometrium and Breast cancers), जोर्नीहरूको समस्या (Osteoarthritis), हाइपोभेन्टिलेसन सिन्ड्रोम (Hypoventilation syndrome), पित्त थैलीको पत्थरी (Cholelithiasis), एथेरोस्क्लेरोसिस, हाइपरलिपोप्रोटिनेमिया आदि।

## उपचार

१. प्रात: खाली पेटमा आधा लिटर जति पानीमा १ चम्चा अर्थात् १० ग्राम

शुद्ध मह घोलेर त्यसमा एउटा रसिलो कागतीको रस घोलेर सेवन गर्ने । यो अभ्यास १ महिनासम्म गर्ने ।

२. पञ्चकर्मअन्तर्गत निरुह वस्ती, वमन तथा विरेचन गर्नाले पनि मेद क्षय हुन्छ ।

३. एकपटक मात्र कुटेको चामल (Unpolished rice), गहुँको रोटी, मकै, कोदोबाट बनेका परिकारहरू खानुपर्दछ । घ्यू, तेल, बोसो, मांस जस्ता खाद्य पदार्थहरूको प्रयोग न्यून गर्नुपर्दछ ।

**लाभदायक योगासन तथा प्राणायामहरु :**

१. पवनमुक्तासन अन्तर्गत पर्ने विविध आसनहरू जस्तै : चक्की चलनासन, नौका सञ्चालनासन, नौकासन, शव उदराकर्षणासन, सुप्त उदराकर्षणासन, रकिङ्ग एण्ड रोलिङ्ग आदिको अभ्यास गर्ने ।

२. दैनिकरूपमा सूर्य नमस्कार सम्पन्न गर्ने । साथै निम्न आसनहरूलाई दैनिकरूपमा सम्पन्न गर्ने ।

३. द्रुत हलासन

४. बज्रासन

५. मत्स्यासन

६. विपरीत करणी आसन

७. मोटोपनमा सबै खाले प्राणायामहरू लाभदायक हुन्छन् । विशेष गरेर भस्त्रिका, शीतली र शीतकारी प्राणायामहरूको अभ्यास गर्ने ।

उक्त योगासन तथा प्राणायामहरूको अभ्यास गर्दा विषयसँग सम्बन्धित विज्ञको सल्लाह लिएर मात्र अभ्यास गर्नुपर्दछ । अन्यथा हानी पनि हुन सक्दछ । जय गुरुदेव !

## मासिक हवन कार्यक्रम

परमपूज्य सद्‌गुरुदेवहरूको कृपा, अनुकम्पा र आशीर्वादस्वरूप सिद्धाश्रम शक्ति केन्द्रले प्रत्येक महिना सञ्चालन गर्दै आइरहेको मासिक हवन कार्यक्रमहरूअन्तर्गत फाल्गुण १ गते बिहीबार ललितपुरको कुम्भेश्वर स्थित बगलामुखी मन्दिर प्रांगणमा तान्त्रोक्त बगलामुखी हवन, फाल्गुण ५ गते सोमबार पशुपति मृगस्थलीमा रहेको गुरु गोरखनाथको मन्दिर परिसरमा श्री शिव गोरक्ष हवन, त्यस्तै ६ गते मंगलबार लगनखेलस्थित वटुक भैरव मन्दिर परिसरमा तान्त्रोक्त वटुक भैरव हवन र फाल्गुण ७ गते बुधबार लगनखेलस्थित महालक्ष्मी मन्दिर प्रांगणमा तान्त्रोक्त महालक्ष्मी हवन कार्यक्रमका सम्पन्न गऱ्यो । उल्लेख्य सहभागीहरुका बीच सम्पन्न हुँदै आएका यी हवन कार्यक्रमहरूमध्ये तान्त्रोक्त वटुक भैरव हवन बिहान ७:०० बजे सञ्चालन हुने गरेको छ भने अन्य हवन कार्यक्रमहरू बिहान ८:०० बजे सञ्चालन हुँदै आइरहेका छन् ।

यस्तै मासिक हवनकै शृङ्खलामा सम्पर्क कार्यालय पोखरा, रामघाटको आयोजनामा महिनाको पहिलो बुधबार अर्थात् फाल्गुण ७ गते स्थानीय विन्ध्यवासिनी मन्दिर परिसरमा तान्त्रोक्त विन्ध्यवासिनी हवन सम्पन्न भयो । यता सम्पर्क कार्यालय तनहुँको आयोजनामा पहिलो बिहीबार अर्थात् फाल्गुण १ गते स्थानीय वेदव्यास गुफा परिसरमा तान्त्रोक्त महर्षि वेदव्यास हवन सम्पन्न भयो । पोखरा र तनहुँमा सम्पन्न भएका यी हवन कार्यक्रमहरू पनि बिहान ८:०० बजे सञ्चालन हुँदै आइरहेका छन् ।

हरेक महिना सञ्चालन हुने दिव्य हवन कार्यक्रमहरूमा सहभागिता जनाएर सहजरूपमा दैवी कृपा, आशीर्वाद प्राप्त गर्न सकिने हुनाले यस्ता कार्यक्रमहरूमा सहभागीहरूको सङ्ख्या दिनानुदिन बढ्दो छ ।

## दिव्य गुरु महोत्सव

परमपूज्य सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको अवतरण भएको पावन दिन अंग्रेजी महिनाको २१ तारीखलाई दिव्य गुरु महोत्सवको रूपमा मनाउँदै आउने क्रममा सिद्धाश्रम शक्ति केन्द्रले गत फाल्गुणमा यस महोत्सवलाई भव्यरूपमा सम्पन्न गऱ्यो । गत फाल्गुण १० गते शनिबारका दिन बसुन्धरास्थित गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रममा उक्त कार्यक्रम आयोजना भएको थियो । बिहान १०:१५ बजे परमपूज्य सद्‌गुरुदेवहरूको प्रार्थना, गोरक्ष निखिल स्तवनको सस्वर पाठबाट शुभारम्भ भएको उक्त कार्यक्रम दुई चरणमा विभाजित थियो ।

कार्यक्रमको पहिलो चरणमा गुरु पादुका पूजन, मन्त्र जप/ध्यान, हवन, लक्ष्यदीप अर्पण, आरती आदि कार्यक्रमहरू रहेका थिए । कार्यक्रममा गुरु पादुकाको पूजन गर्ने सौभाग्य प्रसाद वितरणको अभिभारा वहन गर्दै साधिकाहरू सुस्मिता देवान, नलिनी गिरी, रमा सिंखडा र चिनु सिंखडाले पाउनु भएको थियो ।

कार्यक्रमको दोस्रो चरणमा सिद्धाश्रम शक्ति केन्द्रको तर्फबाट गुरुसेवा दल नं २५ की सदस्य साधिका संगीता लामिछानेले स्वागत मन्तव्य राख्नुभएको थियो । दोस्रो चरणका अन्य क्रमहरूमा भजन-कीर्तन, नृत्य, पुरस्कार वितरण, प्रवचन आदि रहेका थिए । यस क्रममा गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमलगायत संस्थाका आरती सञ्चालन केन्द्रहरुबाट भजन-कीर्तन र नृत्यहरू सम्पन्न भएका थिए । मासिक प्रकाशन गोरक्ष निखिल वाणीको ५० जना वार्षिक सदस्य बनाई साधक नयनकृष्ण त्रिपाठी, श्यामकृष्ण त्रिपाठी र २० जना सदस्य बनाई लोगकुमारी तिमिल्सिना र विमला पाण्डेले परमपूज्य सद्‌गुरुदेवप्रदत्त ‘विशेष धारण माला’ पुरस्कारस्वरूप प्राप्त गर्नुभएको थियो ।

स्ववचनको क्रममा सावर पन्थी नं. २ का सदस्य र सावर मातृकाज्यूले बोल्नुभएको थियो । सावर पन्थी नं. ३ का सदस्यज्यूले सञ्चालन गर्नु भएको उक्त कार्यक्रम दिउँसो ३:३० मा औपचारिकरूपमा सम्पन्न भएको थियो । औपचारिक रूपमा कार्यक्रम समापन भए पनि प्रसाद ग्रहणको अवधिभरि भजन-कीर्तन र नृत्य भइरहेको थियो ।

संस्थापनकालदेखि नै संस्थाले दिव्य गुरु महोत्सवलाई मासिकरूपमा मनाउँदै आइरहेको छ ।

## महाशिवरात्रिमा पूजन एवं भजन

परमपूज्य सद्‌गुरुदेवहरूको परम कृपा, अनुकम्पा एवं आशीर्वादस्वरूप सिद्धाश्रम शक्ति केन्द्रले गत फाल्गुण १२ गते महाशिवरात्रि पर्वको पावन अवसरमा भगवान् शिवको पूजन कार्यक्रम सम्पन्न गर्‍यो । केन्द्रीय कार्यालयलगायत विभिन्न जिल्लाहरुमा रहेका यसका सम्पर्क कार्यालयहरूमा पनि पूजन कार्यक्रम सम्पन्न भएका थिए ।

केन्द्रमा भएको कार्यक्रम बिहान ८:०० बजे प्रार्थनाबाट शुभारम्भ भएको थियो भने सद्‌गुरुदेवहरूको स्तुति-वन्दना, गुरु पूजन, शिव पूजनपश्चात् आरतीपछि सम्पन्न भएको थियो । आरतीपछि लक्ष्यदीप अर्पण गरिएको थियो । पूजनमा साधिकाहरू सोनी दवाडी, मोनी दवाडी र मधुमति रंजितले पूजन गर्ने सौभाग्य प्राप्त गर्नुभएको थियो । यसै अवसरमा आश्रमको केन्द्रीय कार्यालयमा राति धुनी पनि जगाइएको थियो । सावर पन्थी नं. ३ का सदस्यज्यूले सञ्चालन गर्नुभएको उक्त कार्यक्रममा सावर पन्थी नं. २ र सावर मातृकाज्यूको पनि उपस्थिति थियो ।

विगतका वर्षहरुमा झैं आश्रमले महाशिवरात्रिको अवसरमा सोही दिन वनकालीस्थित गुरु गोरखनाथको मंदिर प्रांगणमा आफ्नो स्टल राखी नि:शुल्क स्वास्थ्य शिविर तथा भजन-कीर्तन कार्यक्रमको आयोजना गरेको थियो । कार्यक्रम बिहान १०:०० बजेबाट शुभारम्भ भएको थियो । कार्यक्रममा भजन-कीर्तनमा रम्न तथा उपचार सेवाबाट लाभ लिन भगवान् पशुपतिनाथको दर्शनार्थ आउनुभएका भक्तजनले स्टल खचाखच भरिएको थिए । भजन-कीर्तनको लागि संस्थाका विभिन्न सम्पर्क कार्यालय, आरती सञ्चालन केन्द्रलगायतका स्थानहरूबाट पनि कार्यकर्ताहरू सहभागी हुनुभएको थियो । कार्यक्रमको बीच-बीचमा आश्रमका विभिन्न गतिविधि, उपलब्ध सेवाहरूलगायतको बारेमा जानकारीहरू पनि दिइएको थियो । साथै विभिन्न प्राण-प्रतिष्ठित सामग्रीहरू, गोरक्ष निखिल वाणी आदिको बिक्री-वितरण पनि गरिएको थियो ।

उक्त कार्यक्रम साँझको नित्य गुरु आरतीपछि सम्पन्न भएको थियो ।

यसैगरी आश्रमका अन्य सम्पर्क कार्यालयहरुमा पनि महाशिवरात्रिको अवसरमा भगवान् शिवको पूजन एवं अन्य विविध कार्यक्रम सम्पन्न भएको थियो भने काभ्रेपलाञ्चोक जिल्लामा रहेका शंखु (इँटे) र अमलटारी प्रचारप्रसार कक्षले वार्षिकोत्सवको रूपमा पनि यो पर्वलाई विशेषरूपमा सम्पन्न गरे ।

## का.स.स. क र ख को तालिम सम्पन्न

परमपूज्य सद्‌गुरुदेवहरूको कृपा, अनुकम्पा एवं आशीर्वादस्वरूप सिद्धाश्रम शक्ति केन्द्रले गत फाल्गुण २० र २१ गते कार्यकर्ता सहायक समूह 'क' र 'ख'का लागि राखिएको तालिम तथा प्रशिक्षण कार्यक्रम सम्पन्न गर्‍यो । काठमाडौंको धापासीस्थित नेपाल पूर्व प्रहरी संघमा सम्पन्न उक्त तालिममा सहभागी हुन विभिन्न जिल्लाबाट 'क' समूहमा १४० जना र 'ख' समूहमा १२२ जना गरी जम्मा २६२ जना कार्यकर्ताहरूको सहभागिता थियो । द्विदिवसीय तालिममा कार्यकर्ता सहायक समूह 'क'को तालिम बिहान ६:३० बाट तथा कार्यकर्ता सहायक समूह 'ख' को तालिम बिहान ११:३० बाट प्रार्थना, स्तुति वन्दना, गुरु पूजन हुँदै विविध विषयमा प्रशिक्षण दिने क्रमसँगै सम्पन्न भएको थियो । कासस 'ख'को कार्यक्रम भने साँझ ५ बजेको नित्य आरतीपछि मपन्न भएको थियो । तालिम कार्यक्रमको बीच-बीचमा भजन, नृत्य आदि क्रमहरू पनि समावेश भएका थिए ।

तालिम कार्यक्रममा समूह 'क'बाट पहिलो दिन गुरु पूजन गर्नुहुनेहरुमा साधिकाहरू जुलुम श्रेष्ठ, अन्नपूर्ण के.सी., प्रजुला श्रेष्ठ र विमला पाण्डे तथा दोस्रो दिन साधिकाहरू भवानी गौतम, शर्मिला रेग्मी, शशी भारी, विष्णु पराजुली र साधक निरज कर्माचार्य हुनुहुन्थ्यो भने 'ख' समूहबाट पहिलो दिन साधक सुनिलनन्द वज्राचार्य, साधिकाहरू पार्वती धौगोडा, चञ्चला शर्मा, जयन्ती मल्ल र तारा गुरूङ तथा दोस्रो दिन साधिकाहरू रूपा अर्याल, सान्नानी सिलवाल, फूलमाया कार्की, नमिता कँडेल र रोशना थापाले गुरु पूजन गर्ने सौभाग्य प्राप्त गर्नुभएको थियो । तालिममा संस्थागत कार्यक्रम एवं गुरुकार्यलाई कसरी सफल बनाउने, गोरक्ष निखिल वाणी पत्रिका र हाम्रो दायित्व, नीतिनियम, संगठन एवं आचरणलगायतका विषयमा प्रशिक्षण प्रदान गरिएको थियो ।

कार्यक्रमको अन्त्यतिर सुनाइएको ग्रेडिङमा कार्यकर्ताहरू भावना पलिखे, जमुना पराजुली, विष्णुमाया पराजुली, कोमलनारायण श्रेष्ठ, विक्रम प्रजापति, विन्दु देवकोटा, सुप्रभा नकर्मी, सबिन प्रजापति र यादवप्रसाद श्रेष्ठ 'क' समूहबाट प्रगति गरेर आध्यात्मिक उप-नेतृत्वकर्ता तहमा पदोन्नत हुनुभएको थियो भने समूह 'ख'बाट विकसित भई का.स.स. 'क'मा प्रवेश गर्ने कार्यकर्ताहरूमा मुक्तिचन्द्र अधिकारी, सन्तबहादुर तामाङ, चेतनाथ पोखरेल, मायादेवी महर्जन, अञ्जु थापा, सुशीला प्रसाईं, नन्दकला पहारी, दीपेन्द्र अधिकारी, आशाकाजी श्रेष्ठ, मोहनकृष्ण प्रजापति, पार्वती पुरी, नमिता कँडेल, रामकृष्ण रानामगर र बलमाया त्रिपाठी हुनुहुन्थ्यो ।

## घान्द्रुकमा वक्तृत्वकला

सिद्धाश्रम शक्ति केन्द्र सम्पर्क कार्यालय पोखरा रामघाटको आयोजनामा प्रसिद्ध पर्यटकीय गाउँ घान्द्रुकमा गत माघ २४ गते शुक्रबार 'हाम्रो संस्कृति हाम्रो समाज' विषयक वक्तृत्वकला प्रतियोगिता सम्पन्न भयो । स्थानीय श्री मेश्रम वराह मा.वि. मा सम्पन्न उक्त प्रतियोगितामा सहभागी विद्यार्थीहरूमध्ये फूलमाया वि.क.ले प्रथम, बिनु गुरुङले द्वितीय र राजु नेपालीले तृतीय स्थानका साथ पुरस्कार हात पार्नु भएको थियो । प्रतियोगितामा नारायण क्षेत्रीले सान्त्वना पुरस्कार प्राप्त गर्नुभयो ।

बिहान ११:३० देखि दिउँसो १:३० सम्म संचालित प्रतियोगितामा करिब २ सय पचासभन्दा बढी शिक्षक, विद्यार्थी एवं अभिभावकहरूको उपस्थिति रहेको थियो ।

## प्र.स.का. सुर्खेत आफ्नै भवनमा

सिद्धाश्रम शक्ति केन्द्र प्रस्तावित सम्पर्क कार्यालय सुर्खेत आफ्नै नवनिर्मित भवनमा सरेको छ । बि.न.पा. वडा नं.६ वुद्धपथ उषा बालबाटिका नजिकै निर्माण भएको भवनमा गत फाल्गुण १० गते शनिबार दिव्य गुरु महोत्सवको दिनमा विविध कार्यक्रमको आयोजना गरी आश्रम सारिएको थियो तथा नयाँ भवनमा पहिलो गुरु आरती पनि सोही दिन सम्पन्न भएको थियो ।

## धापाखेलको वार्षिकोत्सव

सिद्धाश्रम शक्ति केन्द्र धापाखेल आरती केन्द्रले गत फागुन १३ गते आफ्नो स्थापनाकालको एक वर्ष पूरा गरेको अवसरमा विभिन्न कार्यक्रमहरूका बीच वार्षिकोत्सव मनायो । प्रार्थना, वन्दना, निखिलेश्वरानन्द स्तुति एवं गोरक्ष स्तवनको सामूहिक पाठबाट दिउँसो १२:३० मा शुभारम्भ भएको उक्त कार्यक्रममा साँझ ४:३५ सम्म संचालन भएको थियो ।

## विन्ध्यवासिनी स.का. मा कार्यकर्ता प्रशिक्षण

सिद्धाश्रम शक्ति केन्द्र सम्पर्क कार्यालय विन्ध्यवासिनी पोखरामा कार्यरत स्वयंसेवी कार्यकर्ताहरुका लागि गत फाल्गुण २४ गते शनिबार विशेष प्रशिक्षण कार्यक्रम सम्पन्न भयो । गुरु सेवा दल नं. ५ का सदस्यज्यूको नेतृत्वमा उक्त प्रशिक्षण कार्यक्रम सम्पन्न भएको थियो । प्रशिक्षण अ.ना.प. शैली एवं आन्तरिक संगठनलगायतका विषयवस्तुमा केन्द्रित रहेको थियो ।

## गुरु गोरखनाथको मन्दिर सरसफाइ

सिद्धाश्रम शक्ति केन्द्र आरती सञ्चालन केन्द्र बबरमहलले गत फाल्गुण ६, ७ र ८ गते तीन दिन लगाएर थापाथलीस्थित श्री श्री महायोगी गुरु गोरखनाथको मन्दिर सरसफाइ गरेको थियो। कार्यक्रममा स्थानीय गुरु सेवक/ सेविकाहरूको उल्लेख्य उपस्थिति रहेको थियो । साथै मन्दिरमा महाशिवरात्रिको अवसरमा आउनुहुने साधु-सन्त, योगी, संन्यासीहरूका लागि वार्षिकरूपमा चल्दै आएको विशाल भण्डारा कार्यक्रममा पनि गत फाल्गुण १२ गते महाशिवरात्रिका दिन उक्त आरती सञ्चालन केन्द्रले सहभागिता जनाई परिकार तयार गर्ने, वितरण गर्ने लगायतका विभिन्न कार्यहरूमा सहयोग गरेको थियो ।

## दाप्चा आ.स.के.को भवन शिलन्यास

परमपूज्य सद्‌गुरुदेवहरूको असीम कृपा, अनुकम्पा एवं आशीर्वादस्वरूप काभ्रेपलाञ्चोकको दाप्चामा रहेको आरती सञ्चालन केन्द्रले गत माघ २७ गते छत्रेबाँझ गा.वि.स.७, कोट हटियामा आश्रम भवनको शिलान्यास सम्पन्न गरेको छ। कार्यक्रम बिहान ११:०३ बजे सद्‌गुरुदेवहरूको प्रार्थनाबाट शुरु भई पूजन, हवन, आरती, भजन कीर्तन, मन्तव्य र प्रसाद ग्रहणसँगै दिउँसो २:०० बजे समापन भएको थियो । आश्रम भवनको शिलान्यास सम्पर्क कार्यालय बनेपाका संयोजक गु.से.द. नं. १२ का सदस्यज्यूले गर्नुभएको थियो ।

## गोरक्ष निखिल मन्दिर निर्माणाधीन

परमपूज्य सद्‌गुरुदेवहरूको असीम अनुकम्पा, कृपा र आशीर्वादस्वरूप कास्की जिल्लाको माझठाना-२, भगवतीटारमा नेपालको इतिहासमै पहिलोपटक श्री गोरक्ष निखिल मन्दिरको निर्माणकार्य भइरहेको छ। त्यहाँ अवस्थित एउटा विशाल चट्टान माथि मन्दिरको निर्माण भइरहेको हो । मन्दिर निर्माण समितिका अनुसार नेपालको भौगोलिक पृष्ठभूमिमा पनि चट्टानमाथि निर्माण भएको मन्दिर कतै भेटिएको छैन। त्यसैले पनि आध्यात्मिकको अलावा पर्यटकीय दृष्टिले पनि यो मन्दिर महत्त्वपूर्ण हुने आशा राखिएको छ । साथै यस पुण्यकार्यमा सहभागी हुन सबैले सहयोग गर्न सकिने कुरा पनि गोरक्ष निखिल मन्दिर निर्माण समितिले जानकारी गराएको छ ।

# Gorakshya Nikhil Joyti Divya Vidyashram

A COMPLETE ENGLISH MEDIUM SCHOOL

ADMISSION OPEN

- सफलताको चार वर्षपछि अब पाँचौं वर्षमा
- एउटा सम्पूर्ण विद्यालय, जहाँ तपाईँका बालबालिकाहरूले गुरुत्व शक्तिको साथ पाउनेछन्, शिवस्वरूप सद्गुरुदेवहरूको हात पाउनेछन्, आधुनिक आध्यात्मिक शिक्षाको आभास पाउनेछन् ।
- एउटा अद्वितीय विद्यालय, जहाँ तपाईँका बालबालिकाहरूले पुस्तक मात्र होइन, जीवन पढ्नेछन्, संस्कार पढ्नेछन् र व्यवहार पढ्नेछन् ।
- एउटा सम्पूर्ण सुविधायुक्त विद्यालय, जहाँ अत्याधुनिक शिक्षा प्रणालीका साथै विशेष आध्यात्मिक प्रविधिद्वारा पठनपाठन भइरहेको छ, बालबालिकाहरुको व्यक्तित्वको चौतर्फी विकास भइरहेको छ, जहाँका विद्यार्थीहरु अनुशासनका नमुना बनिरहेका छन् ।

महंगो स्कूलमा पढाएर, पुस्तकको भारी बोकाएर मात्रै राम्रो शिक्षा प्राप्त हुन्छ भन्ने तपाईंको सोच हुन सक्छ तर हामी भन्छौं, सही शिक्षा त त्यहीँबाट प्राप्त हुन्छ जहाँ शिक्षासँगै दीक्षा प्राप्त हुन्छ, जहाँ निःस्वार्थ सेवाभावले पठनपाठन हुन्छ, जहाँ व्यापार होइन व्यवहार पढाइन्छ, जहाँ प्रचार होइन संस्कार पढाइन्छ, जहाँ पुस्तक मात्र होइन जीवन पनि पढाइन्छ। बालबालिकाहरुको वास्तविक विकास तब मात्र हुन्छ जब आध्यात्मिक र आधुनिक शिक्षाको मेल हुन्छ, गुरु कृपा र आशीर्वादको मेल हुन्छ।

**HURRY UP !**

Admission open for **Limited Seats**
**Transportation Facility** available
**Special Package for Boarders**

PLAYGROUP TO CLASS VIII

Basundhara, Chakrapath, Kathmandu, Tel : 4355737

# गुरु गीता

**आत्मीय पाठकवर्ग, गुरुको महिमा र महत्त्वको बारेमा शास्त्रले उल्लेख गरेका विषयहरूलाई जनसमक्ष उजागर गर्दै गुरूप्रतिको सच्चा भाव र भक्ति जागृत गर्ने उद्देश्यले यस स्तम्भअन्तर्गत अर्थसहित प्रकाशित गर्दै आइरहेका छौँ ।**

**गुरोर्ध्यानेन वै नित्यं**
**देही ब्रह्ममयो भवेत् ।**
**स्थितश्च यत्र कुत्रापि**
**युक्तोऽसौ नात्र संशयः ॥१४७॥**

भावार्थ : गुरुको स्वरूपको निरन्तर ध्यान गर्नाले शिष्य स्वयं ब्रह्ममय हुन्छ, ऊ चाहे गुरुको नजिक होस् अथवा टाढा होस्, उसको कल्याण हुन्छ नै, गुरुले उसलाई आफूसमान नै बनाइदिनु हुन्छ । जसरी कमलकोटी कीराले अरू कुनै कीरालाई आफ्नो साथमा राखेर उसलाई बिस्तारै बिस्तारै आफ्नो डंकले प्रहार गरेर आफैजस्तो बनाउँछ, त्यसरी नै गुरुले पनि शिष्यलाई कालान्तरमा आफ्ना सहस्र रूप प्रदान गर्नुहुन्छ, तब शिष्य ज्ञानमय, चिन्मय, ब्रह्ममय हुन जान्छ ।

**गुरुः शिवो गुरुर्देवो**
**गुरुर्बन्धुः शरीरिणाम् ।**
**गुरुरात्मा गुरुर्जीवो**
**गुरोरन्यन्न विद्यते ॥१४८॥**

भावार्थ : गुरु नै शिव हुनुहुन्छ, गुरु नै देवता हुनुहुन्छ, गुरु नै प्राणीहरूका बन्धुबान्धव हुनुहुन्छ, गुरु नै आत्मा र जीव हुनुहुन्छ, गुरुबाहेक अरू केही पनि छैन । जसरी माटोबाट बनेको प्रत्येक पदार्थ माटोभन्दा भिन्न हुँदैनन्, सुनबाट बनेका विभिन्न गहनाहरू सुनभन्दा भिन्न हुँदैनन्, त्यस्तै गरी सम्पूर्ण सृष्टि गुरुमय नै छ किनकि यसको उत्पत्ति गुरुत्वशक्तिबाटै सम्भव भएको हो । यसप्रकार जब सम्पूर्ण सृष्टिको उत्पत्ति गुरुत्वबाटै भएको हो भने सबै कुरा गुरुत्वमय नै हुने भयो ।

**न सुखं वेदशास्त्रेषु**
**न सुखं मंत्रयंत्रके ।**
**गुरोः प्रसादादन्यत्र**
**सुखं नास्ति महीतले ॥१४९॥**

भावार्थ : यस संसारमा वेद-शास्त्रहरूको अध्ययनमा सुख प्राप्त हुँदैन, मंत्र, तंत्र, तथा यंत्रको साधनामा पनि सुख प्राप्तिको सम्भावना छैन । गुरुकृपा नभए कतै पनि सुखको प्राप्ति हुनै सक्दैन । यो संसार सुख-दुःखादि द्वन्द्व-धर्मयुक्त छ तथा त्रिगुणात्मक भएको हुनाले जीवलाई सुख-दुःखको प्राप्ति हुन्छ नै । ऐकान्तिक आनन्दको प्राप्ति त गुरुकृपाबाटै सम्भव हुन सक्छ, अरू कुनै उपाय छैन ।

**यतः परमकैवल्यं**
**गुरुमार्गेण वै भवेत् ।**
**गुरुभक्तिरतः कार्या**
**सर्वदा मोक्षकांक्षिभिः ॥१५०॥**

भावार्थ : गुरुकृपाले नै जीवलाई मोक्ष प्राप्त हुन्छ । तसर्थ मोक्षको इच्छा गर्ने साधकले सदैव श्रद्धापूर्वक गुरुसेवा गर्नुपर्दछ । सेवाबाट नै गुरुलाई प्रसन्न बनाउन सकिन्छ । यसबाहेक गुरुलाई प्राप्त गर्ने अरू कुनै साधन छैन । अतः गुरु प्रसन्न हुनुभएमा आध्यात्मिक, दैविक एवं भौतिक पूर्णता स्वतः नै प्राप्त हुन जान्छ । शिष्यको सेवाबाट एकपटक प्रसन्न हुनु भएपछि गुरु शिष्यलाई सबैथोक दिन समर्थ हुनुहुन्छ ।

**नित्ययुक्ताश्रयः सर्वो**
**वेदवित् सर्ववेदकृत् ।**
**स्वपरज्ञान दाता च**
**तं वन्दे गुरुमीश्वरम् ॥१५१॥**

भावार्थ : नित्य मुक्त, समस्त साधकहरूका इष्ट रूप, सम्पूर्ण वेदहरूका रचयिता तथा सबै वेदहरूलाई जान्ने, शिष्यलाई आत्मा र परमात्माको ज्ञान प्रदान गर्ने श्री गुरु हुनुहुन्छ । जब कुनै जीवको साम्यावस्था (सत्, तम्, रज गुणको बराबार मात्रा भएको) हुन्छ, अर्थात् शुभ र अशुभ कर्म समाप्त भएर निष्काम कर्मद्वारा मन निर्मल हुन्छ, त्यसै समयमा स्वयं ईश्वर नै गुरुरूपमा अवतरित हुनुभएर उसलाई मार्गदर्शन प्रदान गर्नुहुन्छ । तसर्थ, गुरुको महत्त्वलाई कहिले पनि बिर्सनु हुँदैन ।

**यद्यप्यधीता निगमाः**
**षडंगा आगमाः प्रिये ।**
**अध्यात्मादीनि शास्त्राणि**
**ज्ञानं नास्ति गुरुं विना ॥१५२॥**

भावार्थ : निरुक्त, ज्योतिष, छन्द, व्याकरण आदि छ अङ्गसहित वेदहरूको अध्ययन तथा उपनिषद् आदि अध्यात्म शास्त्रहरूको गूढतम स्वाध्यायबाट पनि मोक्षको प्राप्ति हुन सक्दैन किनकि शास्त्र ती विषयका अनुभव मात्र हुन्, शिष्य वा साधकलाई यी शास्त्रहरूले त्यस ज्ञानसँग परिचित गराउन सक्दैनन् किनभने ती सबै त जड हुन्, अतः गुरुबिना त्यस वास्तविक ज्ञानको बोध हुन सक्दैन ।

जय गुरुदेव !

# दिव्य साधनात्मक सूत्रहरू

*मन्त्र साधनाको क्षेत्रमा अघि बढेर उच्चता हासिल गर्न चाहने सम्पूर्णका लागि अत्यन्त महत्त्वपूर्ण सूत्रहरू जसको अक्षरशः पालना गर्नाले मात्र सफलता प्राप्त हुन्छ, यस्ता दिव्यतम सूत्रहरू श्री सावर संरचना शक्ति केन्द्रद्वारा प्रकाशित तथा योगी शिवशक्तिश्वरानन्द एवं योगी कर्मवीरानन्दद्वारा रचित ग्रन्थ 'मन्त्र साधना–ऊर्ध्वसंगति'को खण्ड घ (सावर संरचनाबाट प्राप्त दिव्य साधनात्मक सूत्रहरू) पाठकवर्गको लाभार्थ क्रमशः प्रकाशित गर्दै आइरहेका छौँ । हामीलाई आशा एवं विश्वास छ, यी सूत्रहरूले यहाँहरूको साधनात्मक उच्चता प्राप्तिमा अवश्यमेव ठोस योगदान दिनेछन् ।*

## संकल्प शक्ति :-

संकल्प शक्ति साधनाको सफलताको लागि महत्त्वपूर्ण मानिन्छ । संकल्प शक्तिभित्र नै सारा सृष्टि लुकेको हुन्छ। भनिन्छ, परब्रह्मको संकल्प शक्तिबाट नै सारा सृष्टि भएको हो । यसैले संकल्प शक्ति प्रबल छ भने जस्तोसुकै कार्य पनि सहजै सम्पन्न गर्न सकिन्छ । हाम्रा पूर्वज ऋषिमुनिहरूले संकल्प शक्तिको बारेमा धेरै खोज अनुसन्धान गरी धेरै गूढ रहस्यहरू उजागर गर्नुभएको छ । संकल्प शक्ति जसको राम्रो छ, उसको लागि यस संसारमा असम्भव भन्ने केही रहँदैन । संकल्प शक्तिकै माध्यमबाट धेरै चमत्कारी घटनाहरू, दिव्यतम कार्यहरू सम्पन्न भएका थुप्रै उदाहरणहरू पाइन्छन् ।

समान्य अर्थमा संकल्प शक्ति भन्नाले कुनै कार्य गर्नका लागि गरिएको अठोट वा कुनै लक्ष्य, उद्देश्य वा केही प्राप्तिका लागि लिइएको दृढ निश्चयलाई बुझिन्छ । कुनै कार्य गर्नको लागि गरिने वाचालाई पनि संकल्पको रूपमा लिइन्छ । मैले यो कार्य अवश्य सम्पन्न गर्नेछु, जस्तोसुकै बाधा व्यवधान आए पनि मैले यो कार्य जुनसुकै हालतमा पूरा गर्नेछु भनी वाचा गरिएको, अठोट लिएको स्थिति नै संकल्प शक्ति हो । हाम्रो धर्म संस्कृतिमा जे कार्य गर्दा पनि संकल्प गरेर गर्ने गरिन्छ । चाहे कुनै पूजा होस् वा कुनै दिव्य कार्य वा अन्य जुनसुकै दैवी कर्म, ऋषि कर्म होस् अथवा गुरुसम्बन्धी, सबैमा पहिला यो कार्य मैले यसरी पूरा गर्छु भनी कार्य गर्नाको उद्देश्यलाई पहिल्यै अठोट लिई गर्ने प्रक्रिया राखिएको छ । संकल्प गरेर मात्रै बाँकी प्रक्रिया अगाडि बढाइएको हुन्छ । यसरी प्रत्येक दिव्य कर्ममा संकल्प स्पष्टरूपमा गरिसकेपछि मात्रै अन्य कार्य गर्ने गरिन्छ ।

संकल्प शक्तिलाई जति मजबुत बनाउन सक्यो, जति बलियो बनाउन सक्यो, व्यक्तिले आफ्नो कार्य त्यति नै छिटो सम्पन्न गर्न सक्दछ । त्यसैले मन्त्र साधनामा अगाडि बढ्ने प्रत्येक व्यक्तिले आफ्नो संकल्प शक्तिलाई बलियो बनाउनु पर्दछ । जुनसुकै हालतमा पनि मैले मेरो साधनामा सफलता प्राप्त गरेरै छाड्नेछु चाहे जस्तोसुकै प्रतिकूलतासँग लड्न परोस्, चाहे छ महिनामा सिद्ध होस् वा छ वर्षमा, मैले मेरो प्रयास प्रयत्नलाई रोक्ने छैन, मैले मेरो अठोटलाई बदल्ने छैन भनेर जसले संकल्पका साथ साधना गर्दछ, उसले साधना सफल गर्दछ । त्यसैले संकल्प शक्तिका साथ, पूर्ण क्षमताका साथ दृढ निश्चयी भई साधनामा अगाडि बढ्नु पर्दछ ।

जो संकल्पसाथ साधनामा आगाडि बढ्न सक्दैन, सानोतिनो दुःख कष्टमा पनि आत्तिएर विकल्प खोज्दछ, उसले साधनामा सफलता प्राप्त गर्न सक्तैन । संकल्प गर्न नसकेर विकल्पको पछि दौडिनेहरूले साधनामा मात्र होइन, जीवनमा नै सफलता प्राप्त गर्न सक्दैनन् । त्यसैले साधनामा अगाडि बढ्नेहरूमा पूर्ण क्षमताका साथ संकल्प शक्ति हुनु जरुरी हुन्छ । कसैको बहकावमा लाग्ने, कसैले आफूले गरेको साधनामा शंका उपशंका गरी भ्रमपूर्ण कुरा गरेकै भरमा आफ्नो संकल्प तोडेर साधना छोड्नेहरू केवल दुर्भाग्य मात्रै निम्त्याउँछन् न कि सफलता । त्यसैले संसारका मानिसहरूले जे सुकै भनून्, जुन रूपबाट हेरून्, जस्तोसुकै दृष्टिकोण राखून्, मैले भावनालाई बदल्ने छैन, मेरो अठोटलाई कमजोर बनाउँदिन, मेरो दृढ निश्चयलाई भत्काउँदिन, मैले गुरु पाएको छु, मैले साधना पाएको छु भनेर जसले संकल्प शक्तिलाई दृढ बनाई अगाडि बढ्दछ, उसैले साधना सफल गर्दछ । यसैले साधना सफल गर्नका लागि संकल्प शक्ति मजबुत हुनु अति नै आवश्यक एवं अपरिहार्य छ । साधना गर्नेहरूले नै संघर्षलाई पार गर्नुपर्ने हुन्छ, प्रतिकूलतासँग जुध्नुपर्ने हुन्छ, दुःख कष्ट झेल्नुपर्ने हुन्छ । त्यसैले कमजोर संकल्प शक्ति भएका व्यक्तिहरूले यी चीजहरूलाई पार गर्न सक्दैनन् र उनीहरू पलायन हुन्छन् । त्यसैले आफ्नो संकल्प शक्तिलाई बलियो बनाऔँ, जस्तोसुकै स्थितिमा पनि आफूलाई समभावमा राख्दै पूर्णताका साथ अगाडि बढौँ, साधनामा सफलता प्राप्त गरौँ ।

# जाँदा जाँदै

हाम्रो सामाजिक परम्परा, चाडपर्व एवं रीतिरिवाजहरु आफैमा गौरवमय छन्, गर्व गर्न लायकका छन्। हाम्रा पूर्वजहरुले हामीलाई दिनुभएका यी अमूल्य उपहारलाई बुझ्न नसक्दा यसको मूलभूत कुरो एकातिर र बाहिरी आडम्बर देखासिकी र अन्य सभ्यताका विकृतिहरुलाई हाम्रो परम्पराभित्र भित्र्याइँदा अहिले हाम्रा रितीरिवाज, चाडपर्वहरु पनि खिचडी बन्दै गइरहेका छन्। यसतर्फ हामीले समयमै सचेत नहुने हो भने हाम्रो आफ्नो पहिचान, अस्तित्व र गौरवको रुपमा रहेका पूर्वजहरुका यी थातीहरु लोप हुनेछन् र हाम्रो देश आफ्नो संस्कृतिविहीन राष्ट्रकोरुपमा परिचित हुन बेर लाग्ने छैन किनकि दिन प्रतिदिन मुलुक पश्चिमी सभ्यतातर्फ आकर्षित हुँदै गइरहेको छ। पश्चिमाहरुले जे गरेका छन् ती कुरा ठीक, हाम्रो आफ्नो परम्परा, संस्कृति, रीतिरिवाज सबै अन्धविश्वास र उहिलेका कुरा खुइले भन्ने भावनाले वर्तमान पुस्ताका युवाहरुमा जरो गाडेको पाइन्छ। यी युवाहरु के सोच्छन् भने पूर्वजका कुराहरुमा वैज्ञानिकता छैन, यो सबै रुढीवादी हो, अन्धविश्वास हो, यस्ता कुराहरुमा विश्वास गर्नु हुँदैन। हामीले उनीहरुलाई बुझाउन पनि सकेनौं र आफैले पनि बुझ्न सकेनौं जसको परिणामस्वरुप समाज यस्तो मोडमा उभिएको छ जहाँ बसेर आउँदा दिनहरुलाई कल्पना गर्दा अन्धकारसिवाय केही पनि देखिँदैन। राजनैतिकरुपमा त हामी पीडित छौं नै, सामाजिक र साँस्कृतिकरुपमा पनि हामी नेपालीहरु पीडित बन्दै गइरहेका छौं। आर्थिक विकास, सामाजिक विकास, साँस्कृतिक विकास यी सबै अब एउटा कथाको प्रसंग मात्र बन्लान् जस्तो देखिएको छ। एकादेशमा हाम्रो देशमा पनि शान्ति थियो रे, एकादेशमा हाम्रो देश आर्थिकरुपमा समुन्नत थियो रे, एकादेशमा हाम्रो देश आफ्नै संस्कृतिको धनी थियो रे भनेर हाम्रा छोरा नातिले कथा नबनाउलान् भन्ने अवस्था अहिले देखिँदैन। अरु कुरामा त हामीले पछि पनि विकास गर्न सकौंला तर जब एकपटक संस्कृतिमाथि हमला हुन्छ, संस्कृतिमाथि धावा बोलिन्छ र साँस्कृतिक पहिचान नै गुम्न पुग्छ, त्यसलाई सुधार्न सयौं वर्ष लाग्न सक्छ। त्यसलाई फेरि पूर्ववत् स्थितिमा ल्याउन एउटा सिंगो जीवनले पनि नपुग्न सक्छ। त्यसैले यस्ता कुराहरुमा समाजका विद्वत् वर्ग तथा आम नागरिकले समेत सोच्नुपर्ने बेला आइसकेको छ। तर सधैं गाँस, बास र कपासको संघर्षमा अल्झिँदा अल्झिँदै जीवन बितेर गएको पत्तै नपाउने आम नागरिकहरुले यतातर्फ सोच्ने फुर्सत कहिले पाउलान्, काम गरेर खान पनि नपाउने, शान्तिसँग सास फेर्न पनि नपाउने, आफ्नो धर्म, आफ्नो संस्कृति, आफ्नो परम्परालाई जोगाएर राख्न पनि नसक्ने यस्तो परिस्थिति भनेको अत्यन्तै भयावह स्थिति हो, यो परिस्थितिको निकास कसरी र कहाँबाट हुन्छ त्यो त भविष्यकै गर्भमा छ। सास छउञ्जेल आश भनेझैं हामीले आश मार्न भने हुँदैन, प्रयास प्रयत्न जारी राख्नु पर्छ। सधैं यस्तो स्थिति नहोला भन्ने आशाका साथ हामी सबै मिलेर हाम्रो आफ्नो सामाजिक परम्परा, रीतिरिवाज र संस्कृतिमाथि भइरहेको ठाडो हस्तक्षेपको विरोध गरौं। यो विरोध र्‍याली, जुलुस, वक्तव्य निकालेर होइन, आफ्नो आचरणमा सुधार गरेर गरौं। हाम्रा विवाह, व्रतबन्ध, भोजहरु, जन्मदिनका पार्टीजस्ता क्रियाकलापहरुले हिजोआज मूल विषयवस्तुभन्दा आडम्बरलाई बढी प्राथमिकता दिएर समाजमा हुनेखानेहरुको दबदबा बनाई हुने र नहुने वर्गबीचको वर्गभेद बढाइराखेका छन्। आज भोलि विवाह त गरिन्छ तर विवाह बन्धनमा बाँधिने जुन धार्मिक परम्परा छ, यसको पछाडि जुन चिन्तन छ र जुन उद्देश्यले विवाह बन्धनको कर्मकाण्ड गरिन्छ त्यो त कता हो कता, खालि पार्टी आयोजना गर्ने, नाच्ने गाउने, जाँड रक्सी खाएर मनोरञ्जन गर्ने कुरालाई पहिलो प्राथमिकतामा राखिन्छ। विवाहको लगनगाँठो बाँध्ने कुरालाई अब छोट्याउदैं छोट्याउँदै केवल औपचारिकतामा सीमित गरिदैछ। यस्तै अन्यान्य कुराहरुलाई पनि छोट्याउने प्रक्रियामा लगिएको छ तर खाने खुवाउने, मोज मज्जा गर्ने कुरा भने झन् झन् थपिँदै छ, लम्बिँदै छ। फलस्वरुप आगामी दिनहरुमा विवाह भनेको भोज खाने, नाच्ने, जाँड रक्सी खाएर मनोरञ्जन गर्ने एउटा परम्परा हो भन्ने बुझेर विवाहको मर्म नै हराउन सक्छ। यस्तो अवस्थामा तपाईं हामीले मितव्ययी बनेर, समाजमा एउटा उदाहरण बनेर मूलभूतरुपमा यस्ता पद्धतिका मर्मलाई आत्मसात् गर्दै परम्परा निर्वाह गर्न सक्यौं भने त्यो नै हाम्रो लागि एउटा सफलता हुनेछ। एकपछि अर्को, अर्को पछि अर्को गर्दै प्रत्येकले अनुशरण गर्ने हो भने हाम्रा पूर्वजहरुले दिनुभएका थातीहरुलाई हामीले पुनः वास्तविकरुपमा नै प्रयोग गर्न सक्नेछौं। तसर्थ, आउँ हामी सबै मिलेर यो अभियानलाई अगाडि बढाऔं, हाम्रो आफ्नो संस्कृति, हाम्रो आफ्नो परम्परा र सामाजिक रीतिरिवाजलाई संरक्षण गरौं। अस्तु!